# तामाङ आदिवासी जनजाति को एथ्नोग्राफिक प्रोफाइल

आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानको एथ्नोग्राफीक प्रोफाइल परियोजनाको लागि तयार गरिएको अनुसन्धान प्रतिवेदन-२०१०


अनुसन्धान कर्ता
अजितमान तामाङ




# तामाङ जातिको चिनारी

# तामाङ जातिको चिनारी

अजितमान तामाङ





आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान
जावलाखेल, ललितपुर, पो.ब.नं. १४३८५
इमेलः nfdin@infoclub.com.np
होमपेजः www.nfdin.gov.np

नेपाल तामाङ घेदुङ
केन्द्रीय सचिवालय
पुतलीसडक, काठमाडौं
फोनः ४१६८०४०

जातिशास्त्रीय विवरणिका/दर्पण शृङ्खला-१६
कृति : तामाङ जातिको चिनारी
प्रकाशक : आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान
र
नेपाल तामाङ घेदुङ
सर्वाधिकार : प्रकाशकमा
लेखक : अजितमान तामाङ
भाषा सम्पादन : प्रतिक ङेसुर तामाङ र प्रमुख, प्राज्ञिक तथा अनुसन्धान महाशाखा
प्रबन्ध/कार्यकारी सम्पादक : डा. लाल-श्याँकारेलु रापचा
प्रकाशन प्रति : १०००
प्रकाशन मिति : असार, २०६९
आवरण तस्विर : रसुवाको तामाङ वस्ती
आवरण/लेआउट : ज्ञानु महर्जन
मुद्रण : कला अफसेट प्रेस

ISBN : 978-9937-2-5036-8



Tamang Jatiko Chinari
Ajitman Tamang







आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान

नेपाल तामाङ घेदुङ



# तामाङ जातिको चिनारी

## कृतज्ञता

**तामाङ जातिको चिनारी** नामक पुस्तक प्रकाशन गर्न पाउँदा हामीलाई खुशी लागेको छ। सर्वप्रथम, हामी नेपाल तामाङ घेदुङको तर्फबाट यसको अनुसन्धान तथा प्रकाशनका लागि सहयोग गर्ने आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानलाई धन्यबाद व्यक्त गर्दछौं। साथै, तामाङ जाति र भाषाका विषयमा अहोरात्र खटेर लाग्ने यस पुस्तकका लेखक तथा खोजकर्ता अजितमान तामाङलाई पनि हामी धन्यवाद दिन चाहन्छौं। यस कार्यका लागि आ आफ्नो तर्फबाट सहयोग गर्नु हुने सबै महानुभावहरुलाई पनि हामी संस्थाको तर्फबाट धन्यबाद व्यक्त गर्दछौं।

यो आखिरमा समुदायको सामूहिक काम हो। यसबाट तामाङ जाति, उसको इतिहास, भूगोल तथा धर्म, संस्कृति र सभ्यतालाई बुझ्न सहयोग पुग्ने विश्वास हामीले लिएका छौं। यसले तामाङ समाजलाई जान्न चाहाने तथा तामाङ समाजको वारेमा अनुसन्धान गर्न चाहाने अनुसन्धानकर्ता एवं अध्यताहरुलाई समेत सहयोग पुऱ्याउने अपेक्षा लिइएको छ। त्यस दिनशामा यो पुस्तकले सहयोग पुऱ्याउन सक्यो भने हाम्रो प्रयास सार्थक भएको ठान्नेछौं।

अन्त्यमा, फेरि पनि आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानलाई सहयोगका लागि धन्यवाद व्यक्त गर्दै आगामी दिनमा यस प्रकारको सहयोगको अपेक्षा राख्दछौं।

**नेपाल तामाङ घेदुङ**

केन्द्रीय कार्यालय, काठमाडौं।

## जातिशास्त्रीय चिनारी श्रृङ्खला–१६ को बारेमा

जातिशास्त्रीय चिनारी श्रृङ्खला-१६ मा *तामाङ जातिको चिनारी* (ई. २०१२) लाई आदिवासी जनजाति उत्थान राष्ट्रिय) (आजउरा) प्रतिष्ठान र नेपाल तामाङ घेदुङको संयुक्त प्रयासबाट प्रकाशनमा आउन सफल भएको छ। सं. २०५८ सालमा तत्कालीन श्री ५ को सरकारले आजउरा प्रतिष्ठान ऐन–२०५८ जारी गरी त्यस ऐन अनुसार आदिवासी जनजातिहरूको उत्थान गर्ने उद्देश्यले आजउरा प्रतिष्ठानको स्थापना भयो। प्रतिष्ठान ऐनले नेपालका विभिन्न ५९ आदिवासी जनजाति समूहहरूलाई सूचीकरण गरेको छ। प्रतिष्ठानको स्थापना कालदेखि नै सूचीकृत आदिवासी जनजातिहरूको उत्थान र सशक्तिकरणको लागि विभिन्न कार्यक्रमहरू सम्वन्धित जातीय संघ/संस्था तथा गैर-सरकारी संस्थाहरू र प्रतिष्ठान आफैंले पनि कार्यान्वयन गर्दै आएको छ। तर सूचीकरणमा परेका धेरै आदिवासी जनजातिहरूको ऐतिहासिक, भाषिक, सांस्कृतिक, वर्तमान आदि अवस्थाबारे भरपर्दो ज्ञान र सूचनाको अभावले गर्दा कार्यक्रमहरू प्रभावकारी ढंगले कार्यान्वयन गर्न कठिनाइ महसुस भई रहेको हुनाले सबै सूचीकृत आदिवासी जनजातिहरूको वर्तमान भाषिक, साहित्यिक, सामाजिक, आर्थिक, सांस्कृतिक र राजनैतिक अवस्थावारे समाज-मानवशास्त्रीहरूवाट अध्ययन-अनुसन्धान गराइएको थियो।

अध्ययन-अनुसन्धानमा विज्ञहरूको तथा अध्ययन-अनुसन्धान स्थलको छनौट र अध्ययन प्रतिवेदनको समालोचनात्मक समीक्षा आदि सम्वन्धित जातीय संस्थाको परामर्श र सहकार्यमा सम्पन्न गरिएको थियो। अनुसन्धान प्रक्रियामा प्रस्ताव लेखनदेखि अनुसन्धानमा अपनाइने वैज्ञानिक पद्दतिहरू, अनुसन्धाताहरूलाई मार्ग-निर्देशन र प्रतिवेदनको समालोचनात्मक टिप्पणी गर्नु हुने विद्वान्हरू डा. चैतन्य मेन्याङबो-सुब्बा (पूर्व-सदस्य, योजना आयोग), अग्रज समाजमानवशास्त्री डा. कृष्ण भट्टचन (त्रिवि, कीर्तिपुर), भौतिकशास्त्री अर्जुन नुगो-लिम्बू (त्रिचन्द्र, त्रिवि) र सांस्कृतिक-समाज-मानवशास्त्री जनक थुलुङ-राई (मिसिगन, अमेरिका) धन्यवादका पात्र हुनुहुन्छ। युवा लेखक अजितमान तामाङको





# आफ्नो भन्नु

तामाङ जातीय पहिचानप्रति गौरव गर्न सम्पूर्ण तामाङ आदिवासी/जनजाति जस-जसले मलाई पाहुनाको रुपमा मात्र नभएर आफ्नै परिवारझैँ नाम्सा, ह्युल्सा खीम्सा 'छिमेकी' लाई झै गरी र घरको परिवार सरह माया गर्नुहुने, आफ्नो *ह्रुअी, थेमे, थेत्मा* र *तामाङ युल्बाको केसा, ठूङसा, बाप्सा* तथा तामाङहरूको *ठुङह्राप, केह्राप, फाह्राप* आदिका बारेमा जानकारी दिनु हुने र सबै भन्दा पहिले निःस्वार्थ सहयोग गर्नु सबैमा आभार व्यक्त गर्न चाहन्छु।

मुख्य रुपमा आफुले सुनेका र थाहा पाएका तामाङ *युल्बाको* विषयमा सोधेका कुरा कुनै झर्को नमानी सूचना उपलब्ध गराउनु हुने आदरणीय मेरा आपाग्रेन केसरसिं तामाङ, आपा जगत बहादुर तामाङ र आफ्नो केरोङ तथा भिमफेदीमा नून लिन जानु भएको तथा पुनर्जन्म भएका बालकहरूको बारेमा बताउनु हुने आमा सेलजोम तामाङ, महत्वपूर्ण तामाङ वंशावलीका पाण्डुलिपि तथा अन्य ग्रन्थहरू उपलब्ध गराउनु हुने आपा काइँला लामा रेम बहादुर तामाङ, तामाङ रेम तथा गोरखालीहरूको बारेमा गाउँमा पहिलेदेखि सुनिआएको इतिहसका कुराहरू बताउनु हुने आपाच्याङबा हुंग बहादुर तामाङ, तामाङ *चेवार टाप्चे* तथा विवाहको बारेमा बताइ दिनु हुने मेरो आज्यो चाङलाई पनि साष्टाङ्ग दण्डवत् गरी विशेष धन्यवाद ज्ञापन गर्छु।

तामाङ आदिवासीका बारेमा आफुसँग रहेको *दोङह्राप, फाह्राप, जिक्तेन तामछ्योअी*, सनदपत्र, इस्तिहार, अभिलेखहरू उपलब्ध गराउनु हुने नुवाकोट जिल्ला बुङताङ गाउँका कोङ्यार लामा, पेम्बर तामाङ, रसुवा गोल्जोङ पाल गोन्पाका लालुङ्बा लामा, धादिङ तिप्लीङका गोम्बो घले लामा, मकावानपुर फाखेल गाविस चखेलका लामा ललित गोले, हाल स्वयम्भू बस्नु हुने काभ्रेका लामा कर्मसिद्ध दोङ, सिन्धुपाल्चोक गुम्थाङका गोन्पाका कोङ्यार लामा धन लामा, सिन्धुपालचोकका नतले घ्याङ गोन्पाका ईश्वरीलाल तामाङ, दोलखा सोक्लाका भाइ अर्जुन पाखिन, गोरख



चुमका लामा गुरु सेरब लामा तथा भाषा अनुवाद् पाण्डुलिपिहरूको सूचना आदि दिनु हुने आचार्य खेन्पो लामा नाम्याला तामाङ, कर्माल्हेग्सेलीङ, स्वयम्भूलाई पनि विशेष धन्यवाद ज्ञापन गर्दछु।

आदरणीय लामा धर्मराज दोङ, आफ्नै पसलका आदरणीय सान्दाई जसले टङ्कन कम्प्युटर प्रिन्टिङ तथा पाण्डुलिपिहरूको अत्यन्त होसियारीपूर्वक पेजहरू मिलाएर फोटोकपी गर्न सघाउनु भएको छ। त्यसैगरी फोटो खिच्न तथा ध्वनि रेकर्डिङमा स्थलगत सहयोग गर्नु हुने मित्र सिजर तामाङ, अनुसन्धान सहायक भाषाशास्त्री राजेन्द्र थोकर, धन बहादुर तामाङलाई पनि यो कार्य सम्पन्न नहुन्जेलसम्म सघाउनु भएकोमा सहृदय धन्यवाद तथा कृतज्ञता ज्ञापन गर्न चाहन्छु।

तामाङ आदिवासी *युल्बाको* समग्र क्षेत्र समेटिएको यो अध्ययन गर्न यो सुअवसर प्रदान गर्न भएकोमा आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान तथा उपाध्यक्ष, जितपाल किरात, सदस्य-सचिव लोक बहादुर थापा मगर एवम् प्रतिष्ठानका अनुसन्धान शाखा अनुसन्धान प्रमुख सुवर्ण चौधरी, सरीना गुरुङ जसले अनुसन्धान अवधिभरि झक्झकाउनुभयो साथै आजउरा प्रतिष्ठान, प्राज्ञिक तथा अनुसन्धान महाशाखा प्रमुख तथा प्रबन्ध/कार्यकारी सम्पादक डा. लाल-श्याँकारेलु रापचा र लेखा शाखा लगायत यस पवित्र कार्यमा सघाउनु हुने, खटिनु हुने सम्पूर्ण कर्मचारीहरूप्रति पनि धन्यवाद तथा कृतज्ञता ज्ञापन गर्न चाहन्छु।

आफ्नो अनुभव आदिवासी जनजातीय भाषिक, सांस्कृतिक, आर्थिक, राजनीतिक, ऐतिहासिकलगायत सबै पक्षको महत्त्वका बारेमा सोधमा पार्नुपर्ने विषयहरू र सैद्धान्तिक विषयवस्तुहरूको बारेमा आफ्नो अमूल्य समय र बौद्धिक ज्ञान प्रदान गरी दिनु हुने यो अनुसन्धान कार्यको सुपरिवेक्षक वरिष्ठ समाजशास्त्री डा. कृष्ण भट्टचनलाई श्रद्धा एवम् हार्दिक धन्यवाद तथा कृतज्ञता व्यक्त गर्न चाहन्छु।

नाम्सामा पुग्दा घरमा खान तथा बस्नका निम्ति सम्पूर्ण चाँजोपाँजो मिलाई दिने लापाका दिनेश लामा, चखेलका ललित गोले, गुम्थाङका धन लामा, रसुवाका लुङबा लामालाई नर्बिसे मायासहित अझ विशेष यो थप धन्यवाद ज्ञापन गर्दछु। तामाङ आदिवासी जनजाति समुदायका बारेमा बेला बेलामा स्रोत-सामग्री तथा राय दिनु हुने आदरणीय डा. मुक्तसिंह तामाङ, लामा ग्हेदुङका पूर्व-अध्यक्ष दुन्दुप लामा रामेछाप, तथा नेपाल तामाङ ग्हेदुङका निवर्तमान अध्यक्ष धनप्रसाद तामाङ, अध्यक्ष कुमार योन्जन, महासचिव कुमार ब्लोन, सचिव प्रतिक डेसुर, निवर्तमान कोषाध्यक्ष उदय ग्हीसीङ लगायत सबै पदाधिकारीहरू यो अनुसन्धानका कार्यको लागि विशेष आभार एवम् धन्यवादको पात्र रहनु भएको छ।



तामाङ आदिवासी जनजाति जातिको यस अध्ययनको सिलसिलामा मेरा सहयात्री भाषाशास्त्री राजेन्द्र थोकर जसले तामाङ विषयमा अध्ययन भएका शोधहरूका बारेमा शोध गरी सहयोग गर्नुभयो, त्यो महत्त्वपूर्ण कार्यप्रति म पुनः उहाँलाई आभार व्यक्त गर्न चाहन्छु।

तामाङ जातिको यो अध्ययन कम्प्युटर लिपि तयारी तथा प्रस्तुतिमा ढिलाइ हुन गएकोमा म अत्यन्त गहिरो क्षमा याचना गर्दछु।

अध्ययनको तथ्याङ्क विश्लेषण तथा सङ्कलन गरी ल्याएका ध्वनिक रुपबाट कम्प्युटरमा टङ्कन लेख्य रुपमा परिवर्तन गरी मौखिक दस्तावेजलाई लिखतमा उतार्न जस्तो कठिन कार्य गरी कम्प्युटर लिपिलाई व्यवस्थित पार्न हरतरहले सहयोगीको भूमिका निर्वाह गर्ने मेरी सहयात्री आशा दोङलाई पनि धेरै धन्यवाद छ।

**अजितमान तामाङ**
ललितपुर,
२०१२



# विषयसूची

## १. परिचय

### १.१ विषय प्रवेश:

नेपाल बहुजाति, बहुभाषिक, बहुसांस्कृतिक र बहुधार्मिक मुलुक हो। त्यस कारण यहाँ धेरै राष्ट्र र भाषा भाषी तथा आदिवासी जनसमुदाय रहेको पाइन्छ। त्यस कारण नेपाल बहु राष्ट्रिय मुलुक हो यो एउटा मात्र जाति, भाषा, संस्कृतिको देस होइन। आदिवासी[1] जनजाति समुदायको मौलिक कला, संस्कृति तथा ज्ञान नै पृथ्वीमा र प्राणीहरूको जीवन चक्रलाई निरन्तरता दिने रक्षा गर्ने ज्ञानको रूपमा बुझ्न थालेपछि संसार भर आदिवासी जनजातिहरूको संरक्षण संवर्धन गरिनु पर्छ भन्ने भनेर एउटा आन्दोलनको रूपमा उठेकाले नेपालमा पनि तामाङ लगायत ५९ आदिवासी जनजाति समुदायहरूको सरकारले पहिचान गरि सूचि कृत गरि सकेका छन्। यसमा छुटेका थप आदिवासी जनजातिहरू सूचि कृत हुने प्रक्रियामा रहेका छन्। यसै गरी संसार भरीका आदिवासीहरूको भाषा, संस्कृति, उनीहरूको मौलिक ज्ञान कला, संस्कृतिको संरक्षण प्रदान गर्न संयुक्त राष्ट्र संघको मुख्यालयमा समेत आदिवासी उच्चायुक्त आदिवासी फोरम स्थापना भएका छन्। किन भने संसारमा भएको चरम भौतिक विकासले सृजना गरेको कृतिम यान्त्रिक तथा रासायनिक प्रयोगबाट संसारमा भएको जैविक, सांस्कृतिक विविधताको लोप सँगै पृथ्वीबाट मानव लगायत जीवहरूको अन्त हुन सक्ने वन जङ्गल, वातावरणीय परिवर्तनका प्रभावहरू देखा परेकाले त्यसको रक्षा केवल स्थानीय परम्परागत र पछौटे भनिएका आदिवासीहरूले अपनाई आएका प्रविधि ज्ञान, सीप र कला संस्कृतिले मात्र पृथ्वीमा रहेको जल, जमिन, बन-जङ्गल, वनस्पति, खाद्यान्न वस्तुहरू आजभोलि मानव लगायत जीवहरूको स्वास्थ्यका दृष्टिले राम्रो मानिएका छन् अर्थात् जैविक विधिबाट उत्पादन गरिएको भनिएका जसले कसैलाई हानी नोक्सान पुऱ्याउँदैन यस्तो प्रविधि युक्त सांस्कृतिक, सामाजिक, धार्मिक प्रणालीको रूपमा उत्पादन सँग सम्बन्धित ज्ञानहरू नै आदिवासी जातिको मौलिक ज्ञानहरू हुन्। तामाङ आदिवासीका भाषा, धर्म, संस्कृति तथा विभिन्न सीप, कला कौशल आदिले तामाङ समुदायको पहिचान तथा नेपालकै मौलिक नेपाली संस्कृतिको पहिचान प्रदान गरिरहेको छ।

### १.२ तामाङ: नेपालको पुरानो आदिवासी जनजाति

नेपालमा तामाङ, नेवार, मगर, थारू, राइ, लिम्बू लगायतको जाति वा राष्ट्रहरूको मौलिक प्राचीन संघीय राज्यहरू थिए । जहाँ उनीहरूको आदिम काल देखि छुट्टो बसोबास रहेको निश्चित भूगोल-क्षेत्र छ, जहाँ उनीहरूको एउटा साझा भाषा छ अनि मौलिक पहिचान युक्त रीतिरिवाज, नियमन, संस्कारहरू तथा आर्थिक उपार्जन प्रणाली प्राकृतिक श्रोत र साधनहरूको मौलिक व्यवस्थापन, उत्पादनका विधिहरू सीप, कला कौसल छन् जसलाई आदिवासी ज्ञानको रूपमा आजपनि चिनिन्छ त्यो थियो र छ । तसर्थ यो कविलाई र गोत्र पछिको विकसित मानव समाज अर्थात् राष्ट्र वा जाति हो । त्यस कारण नेपालको सन्दर्भमा विशेषतः तामाङ, गुरुङ, मगर, थारू, लिम्बू तथा खम्बु आदि मात्र कविलाई र गोत्रबाट विकास हुँदै **राष्ट्र** (nation) अर्थात् **जाति**को अवस्थामा पुगेको तर पुँजीवादी समाजसम्म नपुगेको सङ्गठित समाजको रूप राष्ट्र अर्थात् जाति हो । जसको आफ्नो छुट्टो भूमि, साझा भाषा, संस्कृति र आफ्नै आर्थिक व्यवस्थापन प्रणाली तथा विधि, प्राकृतिक श्रोत साधनको परिचालन उत्पादनका विधिहरू छ । यो राष्ट्रहरू नेपालको भूगोल भित्र भर्खरमात्र बनेको काल्पनिक रूपमा रचेको होइन ।

### १.३. तामाङ नाम:

तामाङ जातिको पहिचान तामाङभाषा र जातिलाई बुझाउने नाम तामाङ कहिले बाट प्रयोगमा आए भन्ने लिखित तथ्यहरू पर्याप्त नभए पनि तामाङहरू आफैले आफ्नो जातिलाई तामाङ भन्नुमा नै गर्व र गौरव गर्छन्। आजको तामाङ जातिलाई अरू समुदाय तथा अन्वेषक, अध्ययन अनुसन्धान कर्ता, लेखकहरूले मुर्मी, इसाङ, (ह्यामिल्टन:१८०२ ग्रियर्सन:१८७३ तिर), सेन (डेबिड ज्याक्सन:१८८९), ग्युबा, कागते आदि नामले उल्लेख गरेको भए तापनि तामाङहरूले आफू भित्र आफैलाई चिनाउँदा तामाङ भनेर चिनाउने र तामाङ मानै गर्भ गर्दछ भन्ने कुरा **तामाङ च्युङ्नीला ठीम थेन तामछ्योओी** आज पनि तामाङ जातिको संस्कार, संस्कृति र न्याय प्रणालीको रूपमा रही रहेको कुराले पुष्टि गर्दछ। यसै गरी सम्बत १८८९ भाद्र ६ को इस्तिहार अनुसार तत्कालीन सरदार बहादुर जङ्गवीर तामाङ अगुवा भइ श्री ३ सरकारमा "हामी बाह्र तामाङको जातिलाई लामा भोटे भनेर बोलाउँदा अरू-अरू जातका पनि भोटे जाति भएकाले नछुटिने भएकाले हामी बाह्र तामाङ जातिलाई लामा भोटे नभनि तामाङ जाति भनिए, अड्डा निजामती जङ्गी आदिमा तामाङ नै भने हुँदो हो भन्ने जाहेर गरेको कुरा मनासिब ठहरिएकाले अव उप्रान्त बाह्र तामाङका भोटे जातिलाई बोलाउँदा लामा भोटे नभनी तामाङ भन्नु, लेख्नु लेखाउनु" भन्ने इस्तिहार जारी भएको थियो। यसले पनि पहिले देखिनै तामाङहरूले आफूलाई तामाङ नै भनेर चिनाउथ्यो भन्ने कुराको स्पष्ट संकेत गरेको छ। ऐतिहासिक रूपमा मुस्ताङ राजा बुमदेगोन(१२५३-८०) को किल्ला अभिलेखमा उल्लेखित तामाङ शब्दले पनि पहिले देखिनै तामाङ जाति वाचक संज्ञाको रूपमा प्रयोग भएको अनुमान लगाउन सकिन्छ।

तामाङ शब्दको निर्माण कसरी भयो भन्ने सवालमा पनि विभिन्न मतहरू पाइन्छन्। कोहिले तामाङहरू तिब्बती घोडा चढी सैन्य बुझाउने शब्द तामाग बाट तामाङ भएका हुन भने पनि यो तर्कको तामाङहरूको पहिलो लेखक सन्तवीर पाख्रीनले सन १९५६ ताका नै होइन भनेर खण्डन प्रकाशमा ल्याउनु भएको छ।

तामाङ शब्दको निर्माण तामाङ जातिको भाषा, संस्कृति र मानव वंशको सम्बन्ध सम्म सामीप्यमा रहेको चिनियाँ भाषाबाट बनेको अनुमान लगाउँदा बढी सार्थक देखिन्छ। यहाँ तामाङ शब्दको बनोटलाई हेरेमा धेरै जनसंख्या भएको समुदाय भन्ने हुन्छ। नेपालमा तामाङ जातिको अहिलेको उपस्थिति र जनसंख्याले यो कुराको नजिक पुऱ्याएको छ। चिनियाँ भाषामा **ता** को अर्थ महान्, विशाल, ठूलो अर्थात् Great भन्ने हुन्छ र **माङ** को अर्थ धेरै परिमाण, धेरै, सर्वसाधारण, साझा जनता भन्ने हुन्छ। यस अर्थले अर्थिएको जस्तै नै तामाङ जातिको नेपालमा हिमाली तथा पहाडी जातिको जनसंख्या हेर्दा सबै भन्दा धेरै र त्यस पछिका जनसंख्या पनि उ सँग कुनै न कुनै रूपमा निकटता राख्ने समुदायहरू नै छ। यस कुरालाई पुस्ट्याउने अरू पनि आधारहरू भाषाको वंश तथा परिवार, ल्होछार संस्कृति, मंगोलायड पेकिङ मानव सभ्यताको विकास आदि भेटिन्छ।

## २. तामाङ केह्राप ठुङह्राप 'इतिहास'

तामाङ आदिवासी समुदायमा सदियौंदेखि *केह्राप ठुङह्राप*का ताम भनेर तामाङ इतिहासबारे कुनै न कुनै रूपमा तामाङ संस्कृति र संस्कारहरूमा उल्लेख भएको पाइन्छ। कतै तामाङ *रीमठीमको केह्राप*, कतै तामाङ *ह्रुइँहरूको ठुङसा बाब्साको* रुपमा वर्णन गरिरहेका पाउँछौं। कतै तामाङ शासकीय इतिहासका रुपमा *ग्लेसा, ग्याल्साहरू*को विवरणको रुपमा *ग्याल्ह्राप* पाइन्छ। तामाङ आदिवासीको इतिहासको कुरा गर्नु पर्दा राज्यका शासकहरूले लेखाएको जस्तो सैद्धान्तिक आधार र काल क्रमिक रुपमा व्यवस्थित इतिहास पाउन मुस्किल छ। तर गहन अध्ययन गरी तुलनात्मक र विश्लेषणात्मक विधिबाट हेर्न हो भने हुँदै नभएका चाहिं होइनन् प्रशस्त पाइन्छ। यस्तो अवस्थामा नेपालको एउटा तामाङ आदिवासी जनजातिको कुरो मात्र होइन; संसारभरका सबैसबै आदिवासीहरूको इतिहासको अवस्था पनि यस्तै हो। आदिवासीहरू कसैले लेखेका लेखाएका जस्तो इतिहासका आधिकारिक लिखत दस्तावेजहरू पाउन मुस्किल हुन्छ।

तर उनीहरूको इतिहासलगायत अन्य मौलिक ज्ञानका कुराहरू जो दैनिक जीवनमा समेत सांस्कृतिक, धार्मिक परम्परा र संस्कारको रुपमा प्रयोग हुँदै आइरहेका छन्। ती मौखिक तथा सांस्कृतिक परम्पराहरूका रुपमा व्यावहारिक र उत्कृष्ट इतिहासको एउटा कालखण्डमा भएको घटना तथा परिघटनाहरूलाई संस्मरण गरेर आज पनि सजीव रुपमा मननयोग्य ढंगले मौखिक रुपमा प्रस्तुत गर्दै आइरहेको पाइन्छ। यिनै मौखिक रुपमा प्रस्तुत गर्दै आइरहेका तामाङ इतिहाससँग सम्बन्धित विषयवस्तु समेटिएको लेखिएका सामग्रीहरू पनि प्रशस्त पाइन्छन्। यस्ता सामग्रीहरू तामाङ आदिवासीको *तामयीग* लिपि अर्थात् बौद्ध धर्मलिपि बुद्ध शास्त्रीय भाषा र लिपिमा लेखिएको *'जीक्तेन तामछ्योओी लाछो स्ह्युरसो' जीक्तेन तामछ्योओी, तामबाला*



तामाङले मेरो केसा नेपाल भन्न सक्छन्। त्यसरी नै स्पष्ट काल तोकेर *डाला केबा* रे भनिन्छ। यो *ठुङसा* जस्तो *केसा* अलौकिक रुपमा प्रयोग भएको पाइँदैन। तसर्थ तामाङ आदिवासीको उद्‌गम इतिहासमा *केसा* भनेको व्यक्तिको जन्म भएको स्थान वा देश भन्ने हुन्छ।

### २.४ उदगमस्थलहरू

तामाङ आदिवासी जनजातिको वंशावली अनुसार प्रत्येक तामाङ *ह्रुइँहरू*को *ठुङसा, बाब्सा* र *केसा*को वर्णन गरिएको पाइन्छ। तामाङ आदिवासीको प्राचीन उद्‌गम पुर्खौली पितृभूमिको रुपमा *बाब्सा*लाई चिनाएको हुन्छ। यसको साथै प्रमुख फोला *ज्योहो/चोहो* 'वंश/कूल/गोत्रको देव/देवी' पनि साथै बताइ दिएको हुन्छ। प्रत्येक *ह्रुइँ*को अलग-अलग *ठुङसा*लाई *बाब्साहरू*को बयान अर्थात् तामाङ जातिको उद्‌गमस्थलहरूको वर्ण निम्नानुसार गरिएको पाइन्छ।

**तामाङ वंशावलीमा उल्लिखित उद्‌गमस्थलहरू**

| | ह्रुइँ (वंश/गोत्र) | बाब्सा र फोला (उदगमस्थल पितृदेव) | स्रोत ग्रन्थ |
|---|---|---|---|
| १ | दोङ, बल, गोले, तीतुङ, ग्राङदान, दोङ बार्ना | दोङ ग्याल्साला मुरकुरी बाब्साला बाब, ह्रुइँकी फोला मुर्क (मार्ग) थेन सीबा मन्डला तेन। ग्यामथान, गोले, ग्राङथान, गोमथान, गाङथान,गोङवा/गोङवो,दारताङ/दारथान, तीतुङ/तीदुङ यार नोन फाछेन मेमे गीकला फेबा ह्रुइँकी फोला ग्यालबो काओीबु नाङसारी हांमु खोरगी तेन। | जीक्तेन तामछ्योओी र ताम्बा काओीतेन |
| २ | योन्जन, | योन्जन बाब्ना नाक्पो थ्यागी गोन्पो बाब्साला बाब, ह्रुइँकी फोला छ्योओीक्योङ यीसे छ्यासीपा (लामा कोन्ज्यो महाकाल) तेन। | जीक्तेन तामछ्योओी र ताम्बा काओीतेन |
| ३ | मोक्तान | मुगु ग्याल्सारी मोक्तान बाब्साला बाब, ह्रुइँला फोला तेनछ्याम ह्याब्जे ला (ना ग्यालबो थेन युम छोमान ग्यालमो थेन गुरु चान्नी ज्योहो तेन। | जीक्तेन तामछ्योओी र ताम्बा काओीतेन |
| ४ | ग्हीसीङ | ग्हीसीङ बाबना सेर गोङ स्यार गोसाला/ग्याल्सा बाब्साला बाब, ह्रुइँकी फोला लु/लुगु चाङमारकी लदाङ चाङरी ज्योहो तेन। | जीक्तेन तामछ्योओी र ताम्बा काओीतेन |
| ५ | बल | बाल बाप्ना रुम्याल गान्दी तेमाल गाङ बाब्साला बाब, ह्रुइँकी फोला दो मारपोला तेन। | जीक्तेन तामछ्योओी र ताम्बा काओीतेन |
| ६ | ग्रोपचान | ग्रोपचान बापना बान्डी ज्युङ बाब्साला बाब, ह्रुइँकी फोला | जीक्तेन तामछ्योओी र |



# तामाङ जातिको चिनारी

## ३. तामाङला सा 'तामाङ भूगोल'

नेपाल एक मात्र जाति, भाषा, संस्कृतिको देश होइन। नेपालमा धेरै मानव समुदायहरू बसोबास गर्छन्। यसमध्ये नेपाल सरकारले ५९ जातिहरूलाई आदिवासी जनजातिको सूचीमा सूचीकृत गरेको छ भने छुटेकाहरू थप सूचीकृत हुने प्रकृयामा रहेका छन्। नेपालमा तामाङ, नेवार, मगर, थारु, कोँइच (सुनुवार) राई, लिम्बूलगायतको जाति वा राष्ट्रहरूको मौलिक प्राचीन सङ्घीय राज्यहरू थिए।

उनीहरूको आदिम कालदेखि छुट्टै बसोबास रहेको निश्चित भूगोल क्षेत्र छ जहाँ उनीहरूको एउटा साझा भाषा (तर बहुभाषी किराँतीहरू) छ। अनि मौलिक पहिचान युक्त रीतिरिवाज, नियमन, संस्कारहरू तथा आर्थिक उपार्जन प्रणाली प्राकृतिक स्रोत र साधनहरूको मौलिक व्यवस्थापन, उत्पादनका विधिहरू सीप, कला कौशलतालाई आदिवासी ज्ञानको रुपमा आज पनि चिनिन्छ। त्यो थियो र छ। तसर्थ, यो कबिलाइ र गोत्रपछिको बिकसित मानव समाज अर्थात् राष्ट्र वा जातीय भूगोल हो।

त्यसकारण नेपालको सन्दर्भमा विशेषतः तामाङ, थकाली, गुरुङ, मगर, थारु, कोँइच (सुनुवार), लिम्बू तथा खम्बु (राई) आदि मात्र कविलाई र गोत्रबाट विकास हुँदै राष्ट्र (nation) अर्थात् जातिको अवस्थामा पुगेको तर पुँजीवादी समाजसम्म नपुगेको सङ्गठित समाजको रुप राष्ट्र अर्थात् जाति हो। यसको आफ्नो साझा भाषा (किराँत बहुलभाषा), संस्कृति र आफ्नै आर्थिक व्यवस्थापन प्रणाली तथा विधि, प्राकृतिक स्रोतसाधनको व्यवस्थापन र उत्पादनका विधिहरू भएको छुट्टै भूमि अर्थात् भूगोल छ। नेपालको यो तामाङ राष्ट्रलगायत अर्थात् आदिवासी जनजातिहरूको ऐतिहासिक राजनीतिक भूगोलको खोजी गरी हेर्ने हो भने मगरहरूको बाह्र मगरात, अठार मगरात, तमुवानको बाह्र गाउँले, ताम्सालीङको बाह्र गोर्स्याङ,

बेलामा हावाको बज्राकार हावा बसेछ। हावाको माथि आगो बसेछ। आगोको माथि पानीको तलाउ बसेछ। तलाउमाथि पानीको फिंज बसेछ। फिंजमाथि पानीको तर बसेछ। पानीको तरमाथि धर्तीको माटो बसेछ। धर्तीको माटोमाथि सुमेरु पर्वत बसेछ। पूर्व दक्षिण पश्चिम उत्तर चार दिसामा ६ लोकमा मानव सृष्टि भएछ। माथि देवताहरू बसेछ। तल पातालमा नागराज बसेछ। अन्तरिक्षमा सिकारी देउताहरू बसेछ भनेर सृष्टि बारे बताएको पाइन्छ।

### ३.२ *लीङछ्या, युल छ्या* 'द्वीप र राष्ट्रहरूको स्थापना'

तामाङ आदिवासी धारणा अनुसार पहिले धर्तीको सृष्टि भई सकेपछि पृथ्वीमा बिभिन्न भूगोलहरूको उत्पत्ति भयो। त्यसपछि *लीङ-ब्रे ब्रे-छ्योरी* 'आठ दिशामा आठ-द्वीप' को रुपमा *युल्सा* 'राष्ट्र' तथा देशहरूको स्थापना भयो। देशहरूको महिमा फरक-फरक रह्यो भनेर यसरी बताएको पाइन्छ।" *स्यार दोर्जेसेम्बा, लो रीन्जेन ज्युङने, नुब नवाथाय, ज्याङ दोयन डुब्बा अुअी नाम्बार नाङज्ये साङग्ये डानुन छोक्पा छोखाङ, डुप्पा डुब्खाङ दोर्जेदेन छ्याजीमाअी दाङबो।*

१. *दोर्जेदेनला स्यारगाअी छ्योरी बाङ्गालीङ* 'बङ्गाल *छ्याजीमाअी दाङबो*।
२. *लोगाअी छ्योरी बेतालीङ* 'बेतीया' *छ्याजीमाअी दाङबो*।
३. *नुबगाअी छ्योरी अुर्ग्यानलीङ* 'पेशावर' *छ्याजीमाअी दाङबो*।
४. *ज्याङखाअी छ्योरी खाछ्योअीलीङ* 'कस्मीर' *छ्याजीमाअी दाङबो*।
५. *स्यारलो छ्यामरी खाम्बुलीङ* 'खाम तिब्बत' *छ्याजीमाअी दाङबो*।
६. *लोनुब छ्यामरी साङ्गालीङ* 'सिलोन' *छ्याजीमाअी दाङबो*।
७. *नुबज्याङ छ्यामरी साहुरलीङ* 'काबुल' *छ्याजीमाअी दाङबो*।
८. *ज्याङस्यार छ्यामरी कामरुपलीङ, डीन्दालीङ थेन सामदेनलीङ छ्याजीमाअी दाङबो। देने म्हीककरी म्ही डाक्पो लीङ ब्रेचाम छ्याजीमाअी दाङबो थेचा लीङ ठीनला गुङरी....*" (*ताम्बा काअीतेन क्वाअी रीमठीम*, पृष्ठ-५० र *मोक्तान हुअीकी फोला छ्योअी* बाट) भनेर तामाङ वंशावलीमा *जाम्बुलीङ* 'विश्व' र आठ द्वीप रुपी *युल्सा* 'देश' हरू यसरी बने।" भनेर हालको अफगानिस्तानको कान्दाहार, काबुल, पाकिस्तानको पेशावर, भारत-पाक कास्मीरदेखि चीनको भित्री मङ्गोलिया (Inner Mongolia), खाम तिब्बत, भारतको बेतीया, सिलोन, असम, बंगलादेश, बर्मा (म्यान्मार) ब्रह्मपुत्रको आसपासको राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सभ्यता तथा भूगोलको तामाङ वंशावलीले बर्णन गरेको पाइन्छ।

### ३.३ *खीम्सा, नाम्सा, युल, युल्सा, ग्याल्सा थेन कीपट सा*

**'तामाङ राष्ट्र र किपट भूमि'**

विश्व र तामाङ भूगोलको सृष्टि गाथापछि मौलिक तामाङ
*ग्याल्सा* 'राज्य', *युल* जिल्ला-क्षेत्र वा धेरै गाउँहरूको सङ्घ',
*हुअीहरू*को थलो' र *खीम्सा* 'हुअी विशेषको थलो' का रुपमा त
वृत्तान्त तामाङ वंशावलीमा पाइन्छ। यसमा तामाङ आदिवा
पुर्ख्यौली थलो (ancestral land) को रुपमा *ठुङसा, बाब्सा* र
रहेका छन्। यस्ता तामाङ भूमिका आधारमा तामाङ राष्ट्रक
प्राचीन भूमि वा भूगोलको प्रशस्त आधारहरू पाइन्छ।

युगौंयुगको कालखण्डको परिवर्तनसँगै आज ती भूगोलहरू कतिपय
भूमिमा पर्छन्। तापनि धेरैजसो नेपालको सीमाभित्रै पर्दछन्।
वंशावलीमा वर्णन गरिएका तामाङ पुर्ख्यौली थलो र प्राचीन
हालको नेपाल तथा हाम्रो छिमेकी चीनमा समेत पर्दछ
आदिवासी/जनजातिको *ग्याल्सा* 'गणराज्य' नेपालको हालको
हो। यो भूगोलमा तामाङहरूको उपस्थिति ऐतिहासिक त्यो कालखण्ड
निरन्तर रहेको कुरा यो भूमिमा भूमिसँगको तामाङ आदिवासीको
मौलिक सम्बन्धले नै पुष्टि गर्दछ। त्यो निम्नानुसार रहेको पाइन्छ

तामाङ वंशावलीमा उल्लेख भएका *साङ्बो*को *बाब्सा* 'पुर्ख्यौली थ
*युल्सा*, त्यसैगरी पाखिनको *बाब्सा पुराङ च्यो, थीङ*को *बाब्सा*
*ङ्यासुर*को *बाब्सा चाङकोङ, ग्याप्वा*को *बाब्सा ग्यानक* ची
*बाब्सा पाल्गी अुअी सामय, सीङगार*को *बाब्सा डाकार, ग्राङ*
*ग्यानाक युल्साहरू* चीनको भूभागमा पर्दछ भने मोक्तानको
*बोमजान*को *बाब्सा डीलीब्राखर, बल*को *बाब्सा तेमाल रुम्पाल ग्य*
हिमाली तथा उच्च पहाडी भूभागमा पर्दछ।

यसरी तामाङ आदिवासीले पुर्खौली प्राचीन थलो र जमिनलाई
पहिलो चोटि आवादी बसाल्दै आएको *नाम्सा, युल, युल्साहरू*को
भौगोलिक क्षेत्र (Traditional Geographic Territory) तामाङ
किपटको रुपमा रहेको छ। प्रत्येक किपटका किपटिया एउटा हुअी
हुन्छ। एउटै हुअीका तामाङहरूको एकैभन्दा बढी किपटहरू हु
किपटहरू बंशावलीमा यसरी उल्लेख भएको छ।

# तामाङ जातिको चिनारी

युल छेन्बो, युल्ला भनेर सम्बोधन गरेको पाइन्छ । त्यसैगरी प्राकृतिक स्रोत साधनहरू *युल्ला गान्दी, युल्ला ने, युलकोर/खोर* परिधी सिमाना, *युलदीम/खीम* र *युलला जोङ* आदि *युल* भौगोलिक संरचनाका लागि आवश्यक विषय वस्तुहरूको तामाङ वंशावलीहरूमा उल्लेख गरेको पाइन्छ । तामाङ आदिवासीका विभिन्न *हुआी*का तामाङ *युलबा*को विभिन्न *युल* 'राष्ट्र' हरूको वर्णन पाइन्छ । उदाहरणका लागि *स्याङबो*को *बाव्सा स्याङ स्युङ* वा *स्याङ युल, ग्याबक ग्यानाक* 'चीन' *युल्सा, गोङबा*को *गोङ ग्याल्सा,* मोक्तानको मुगु *ग्याल्सा, ख्युङबा*को *डुकु ग्याल्सा* आदि । यसरी नै अन्तर्राष्ट्रको रुपमा *उर्गेन युल, सहोर युल, डुक युल, बोद युल, माङयुल, ग्याकार युल* 'भारत' भनेर तामाङ वंशावलीहरूमा *युल/युलसा*को वर्णन पाइन्छ ।

### ३.४ तामाङ *च्युङनीला सा* '१२ तामाङको भूगोल'

तामाङ आदिवासी समुदायमा *रीमठीम*को कुरा गर्दा सबैभन्दा पहिले झट्ट तामाङ *च्युङनीला ठीम* वा *रीमठीम* भनेर आउने गर्दछ । यो पनि अधिकांश नाम्साहरूमा आजका पिँढीले त नसुनेका पनि भन्न थालेका छन् । तापनि तामाङ *रीमठीम*ले समग्रमा तामाङ न्यायप्रणाली, संस्कार प्रणाली, दन्डप्रणाली, शासकीय प्रणालीको रुपमा *खीम्सा, नाम्सा*देखि *युल/युल्सा*सम्मका राजनैतिक भूगोलभित्रको *ठीम* बसालेको पाइन्छ । यस्तो *ठीम*हरूमध्ये सबैभन्दा मर्मस्पर्शी *ठीम* तामाङ *च्युङनीला ठीम* हो । त्यसकारण यहाँ तामाङ *च्युङनी* भनेको के हो ? भन्ने कुरा मुख्य प्रश्नको रुपमा आएको छ ।

तामाङ *च्युङनी*ले पहिलो पटक तामाङ आदिवासी समुदाय राष्ट्रको रुपमा विकास भएको थियो र छ भन्ने दह्रो प्रमाण दिएको छ । तामाङ *च्युङनीला ठीम* भन्ने वित्तिकै *च्युङनी* (बाह्र) जना तामाङले बनाएको *ठीम* भन्ने हुन्छ । ती बाह्र जना तामाङ को को थिए भन्ने कुराको खोजी गर्दा तामाङ समाजमा *खीम्सा, नाम्सा, युल्सा*को सङ्घात्मक मौलिक *युल्सा*हरूको तत्कालिन समयमा प्रचलनमा रहेको सङ्घात्मक संरचना र इकाईको नयाँ आधार १२ *नाम्सा* अर्थात् १२ गाउँको संयुक्त रुप प्रयोगमा व्यवहारमा आउनुले त्यो बेलामा पनि नेपाल विभिन्न जाति/राष्ट्र/Nation को रुपमा सग्लो नै थियो । प्रत्येक जातिको छुट्टै अलग-अलग स्वायत्त र स्वतन्त्र सङ्घात्मक गणराज्यहरू समेतको नेपाल थियो भन्ने दह्रो सङ्केत मिलेको छ । किनभने १२ गाउँको सङ्घात्मक धारणा तामा, *च्युङनी*मा मात्र सीमित नरहेर पश्चिम नेपालको १२ मगरात, मुस्ताङको १२ गाउं, १३ गाउँ, ५ गाउँ, ३ गाउँ, काठमाडौं उपत्यकामा पनि



नेवारहरूमा झीन्हीम्ह थकुरजुजु, पूर्वमा १० लिम्बूवान र तराइमा थारुको *सौराठ* 'सभा' आदि शासकीय संरचनायुक्त राजनीतिक भूगोल रहेको पाइन्छ । यसैको आधारमा १२ वटा तामाङ *नाम्सा*हरू मिलेर तामाङ *च्युङनी* (१२ तामाङ) को एउटा सङ्घात्मक भूगोल बनेको कुरा अब ठोकुवाका साथ भन्न सकिन्छ ।

जसरी एउटै हुआीका तामाङको किपट एकभन्दा बढी छन् त्यसरी नै यस्ता तामाङ किपट *नाम्सा*हरूको साझा र संयुक्त *नाम्सा*को स्वरुप सङ्घात्मक रुपमा विकास भई तामाङ *च्युङनी* बनेको देखिन्छ । र यही आधारमा तत्कालीन समयमा सङ्घात्मक स्वरुपको साझा आधारको रुपमा १२ गाउँहरूलाई गाउँको सङ्ख्याका आधारमा संयुक्त गाउँ सङ्घ निर्माण गरिएको देखिन्छ । यसमा मूल आधारको रुपमा १२ गाउँलाई मानिएको देखिन्छ । किनभने नेपालका यी १२ गाउँको कुरा ईशाको दोस्रो शताब्दीका अर्थशास्त्री कौटिल्यको अर्थशास्त्रमा समेत उल्लेख गरिएको छ । त्यसकारण तामाङ *च्युङनी*को *ठीम* (१२ तामाङको प्रथा), बाह्र तामाङ किपट/बाह्र तामाङ गाउँ वा बाह्र तामाङ *युल*का १२ जना प्रतिनिधिहरू रहेको *छोक्पा/जोम्सा* या सभाको शासकीय राजनैतिक भूगोल तामाङ आदिवासीका प्राचीन सङ्घात्मक *युल* वा *ग्याल्सा* 'गणराज्य' हरू हुन् ।

हालसम्म जानकारीमा आएको यस्तो तामाङ *च्युङनी* 'बाह्र तामाङ' सङ्घ नेपालमा तीन वटा भएको सूचना प्राप्त भएको छ ।

(क) पूर्वमा १२ *तेमाल ग्याल्सा* 'जोङ' क्षेत्र

(ख) मध्यमा १२ लाच्याङ ग्याल्सा 'जोङ' क्षेत्र

(ग) पश्चिममा १२ गोरस्याङ ग्याल्सा 'जोङ' क्षेत्र जसलाई प्राचीन कालदेखि तामाङहरूले '१२ तामाङ' को सङ्घात्मक स्वरुपको राष्ट्रकैस्तरमा भौगोलिक, सांस्कृतिक, प्रथा, परम्परा र संस्कारहरूलाई तामाङ *च्युङनीला ठीम* तथा *रीमठीम*को मूल्य र मान्यतामा विकास गरी व्यवहार आजसम्म आफू र आफ्नो समाजभित्र प्रयोग गरी समाजमा स्थापित गरी ल्याएको पाइन्छ ।

तसर्थ तामाङ आदिवासी जनजातिको भूगोल तथा राष्ट्रको प्राचीनताको एउटा महत्वपूर्ण आधार १२ गाउँको सङ्घ अर्थात् तामाङ *च्युङनी*को भूगोलहरू बाह्र *तेमाल,* बाह्र *लच्याङ* र बाह्र *गोर्स्याङ ग्याल्सा*का बारेमा मौखिक तथा लिखित तामाङ इतिहासका स्रोत सामग्रीहरूमा पाइन्छ ।





## ४. तामाङ चीछोकको छोक्पा थेन ब्रेल्बु

(सामाजिक संरचनाहरू र सम्बन्ध)

### ४.१ तामाङ स्हीमखाङ मुबा ग्ला (बास स्थान):

तामाङ समुदायको बास स्थान जलवायुका दृष्टिले हिमालय उच्च पहाडी भूभाग देखि महाभारत र चुरे पर्वतमाला हुँदै दून प्रदेश सम्म क्रमसित: फैलिएर रहेको पाइन्छ। तामाङ बस्ती या गाउँहरू प्राय एकै ठाउँमा गुचमुच्च बाक्लो रहेको हुन्छ।

गाउँको सिरमा गुम्बा रहेको हुन्छ। उत्पादन स्थानहरू गाउँ देखि माथि र तलतिर गरी दुई तिर रहेको हुन्छ। गाउँ देखि उच्च हिमालय तर्फ लेकका खर्कहरूमा प्राय गोठहरू र एक सिजनको खेती हुने बारीहरू मात्र हुन्छ।



***धादिङ युलला कुकु तामाङ नामसा***

त्यहाँ बाली पाक्न छ महिना देखि नौ महिना सम्मको समय लाग्छ। खर्कहरू देखि मुनुतिर गाउँको नियन्त्रणमा रहेको बन जङ्गल रहेको हुन्छ। तामाङ पुरानो बस्तीमा घरहरू एकै स्थानमा गुचमुच्च र एक पछि अर्को घरको गारो लहरै जोडिएको हुन्छ। घरहरू कुनै पनि क्षेत्रमा एकै स्थानमा बनाएको हुन्छ।

### .४ थेत्मा/थेमे (परिवार), नाता कुटुम्ब

तामाङ आदिवासी समुदायमा आफ्नो रगतको नाता तथा गोत्र कूलको नाता आदिको निर्धारण हुआीले गर्ने हुन्छ। किन भने एउटा हुआीको तामाङ र अर्को हुआीको तामाङ नाता विवाहबाट सुरू हुन्छ। त्यसको निमित्त आफ्नो सगोत्र हुआी प्रत्येक तामाङ लाई थाहा हुनु पर्ने हुन्छ। थाहा हुन्छ। त्यस कारण तामाङको हुआी व्यवस्था निम्नानुसार संगठीत हुन्छ।

### ४.४.१ ङाहुआी जेहुआीकी ब्रेल्बा:

तामाङ जाति भित्र विभिन्न सय भन्दा बढ्ता हुआी (थर)हरू हुन्छ। यही हुआीहरूको सगोत्रीय जतिको अलग एउटा समूह हुन्छ त्यो समूहलाई **ङारूआी** भनिन्छ। यी सगोत्रीय हुआीहरू मुख्य रूपमा ङाहुआी अर्थात् पाँच वटा हुआीहरूको एउटा समूहमा हुन्छ। उदाहरणका लागि योन्जन, लोपचन, बमजन, डुमजन, मीक्चन यी पाँच हुआीहरू एउटा ङाहुआी हुन। यसरी नै दोङ, गोले, बल, ग्राङदान र तीतुङ/तीदोङ यी पाँच हुआीहरू अर्को ङाहुआी हो। यही ङा हुआीको अन्य हाँगाबिँगा हुआीलाई एउटै हुआीको नजिकको हुआी **जेहुआी** पनि भन्ने गरेको पाइन्छ। यस्तो ङाहुआी समूहहरू धेरै छन्। यस कुरा ङाहुआी, थेतगी र स्वाँगी को तालिकाबाट अझ बढि स्पष्ट हुन सकिन्छ। हेर्नुहोस् स्वाँगी हुआी तालिका।

### ४.४.२ थेतगी/थेमेगी हुआी:

ङाहुआी भित्रका पनि विभिन्न हाँगो बसोबासको स्थान विशेष, पेशा, सुरूफुरूका नियम आदिले पैदा भएको थेतगी/थेमेगी हुआीहरू जो एउटै परिवारको अर्थात् सगोत्रीय नै मान्दै आएको छ त्यस हुआीलाई **थेतगी/थेमेगी** भनिन्छ। जस्तै: एउटा स्वाँगीको ङाहुआी भित्रको एउटा सदस्य हुआी लोप्चन हुआी अन्तर्गतका हाँगो चो/जो/थो मा बस्ने चोथेन, ब्लेमा बस्ने ब्लेन्देन, स्योङको किनारमा बस्ने स्योङथेन, गाङमा बस्ने गाङथेन आदि हुआीहरू लोप्चन हुआीकै हाँगोहरू थेतगी/थेमेगी हो। थेतगी भित्र पर्ने हुआी, ङाहुआी कै एउटा हुआी भएकाले तीनीहरू एक आपसमा स्वाँगी हुआी हुन। कुटुम्बेरी चल्दैन तसर्थ त्यो हुआीहरूको बीचमा विवाह हुँदैन।

### ४.४.३ स्वाँगी हुआी:

यी ङाहुआी र थेतगी/थेमेगी लाई एउटै सुत्रमा बाँध्ने सजातीय(एउटै हुआीको) वा सगोत्रीय मान्दै आएको जति सबै हुआीहरूको सग्लो समूहलाई **स्वाँगी** भनिन्छ। एउटा ङाहुआी समूहमा पर्ने सम्पूर्ण हुआीहरूको पनि हाँगो थेत/थेत्मा/थेमे हुआीहरू समेतको एउटा सग्लो परिवार जसको नाता दाजुभाई/दिदीबहिनी का रूपमा हुन्छ यस्तो

# तामाङ जातिको चिनारी

**स्वाँगी ह्रुई**

यी *ङाह्रुई* र *थेतगी/थेमेगी* लाई एउटै सुत्रमा बाँध्ने सजातीय (एउटै *ह्रुई*को) वा सगोत्रीय मान्दै आएको जति सबै *ह्रुई*हरूको सग्लो समूहलाई *स्वाँगी* भनिन्छ। एउटा *ङाह्रुई* समूहमा पर्न सम्पूर्ण *ह्रुई*हरूको पनि हाँगो *थेत/थेत्मा/थेमे ह्रुई*हरू समेतको एउटा सग्लो परिवार जसको नाता दाजुभाइ/दिदीबहिनीका रुपमा हुन्छ। यस्तो नाताको एउटा समूहमा पर्ने *ह्रुई*लाई *स्वाँगी* भनिन्छ। *स्वाँगी ह्रुई*हरू *ङाह्रुई* र *थेतगी* ह्रुईहरूको समेत एउटै सगोत्रीय *ह्रुई* हुने भएकाले तिनीहरू बीचमा कुटुम्बेरी चल्दैन र बिहेवारी हुँदैन। अर्को भाषामा भन्नुपर्दा *ङाह्रुई* अन्तर्गतका सबै *ह्रुई*लाई *स्वाँगी* भनिन्छ। यी एउटै *स्वाँगी* अन्तर्गतका *ह्रुई*हरूको बीचमा अर्थात् स्वाँगेहरूको बीचमा कुटुम्बेरी हुन सक्दैन र विवाह हुँदैन। भएमा समाजबाट वर्जित र बहिष्कृत गर्न कठोर ठीम रहेको छ। तामाङ समुदायमा आजसम्म पनि यो ठीमलाई उल्लङ्घन भएको पाइँदैन। उदाहरणका लागि तामाङ जातिका *ङाह्रुई* योन्जन, लोप्चन, बमजन, डुमजन, मीक्चन यी *ङाह्रुई*हरूका बीचमा बीचमा विवाह हुँदैन। त्यसैगरी दोङ, गोले, बल, ग्राङदान, तीदुङ/तीतुङ यी *ङाह्रुई*हरूका विचमा विवाह हुँदैन र *ङाह्रुई*का पनि *थेत* अर्थात् *स्वाँगे ह्रुई*हरू एक आपसमा सगोत्रीय हुने भएकाले यी *ह्रुई*हरूका बीचमा पनि विवाह हुँदैन।

*तालिका-२*

**स्वाँगी ह्रुई -१**

| क्र.सं. | ङाह्रुई | थेत ताबा ह्रुईहरू | | |
|---|---|---|---|---|
| १ | योन्जन | | | |
| २ | लोप्चन | चोथेन, ब्लेन्देन, स्योङथेन, गाङथेन | | |
| ३ | मीक्चन | | | |
| ४ | बमजन | | | |
| ५ | डुमजन | | | |

**स्वाँगी ह्रुई -२**

| क्र.सं. | स्वाँगी-ङाह्रुई | थेत ताबा ह्रुईहरू | | |
|---|---|---|---|---|
| १ | दोङ | माम्बा, डीम्दोङ, हीम्दोङ ? गाङथेन दोङ, होपथेनदोङ, ब्लेन्देनदोङ, बाज्यु/बाच्यु | | |
| २ | गोले | | | |
| ३ | बल | | | |
| ४ | ग्राङदान ? | | | |
| ५ | तीदुङ/तीतुङ | | | |

**स्वाँगी ह्रुई -३**

| क्र.सं. | स्वाँगी-ङाह्रुई | थेत ताबा ह्रुईहरू | | |
|---|---|---|---|---|
| १ | वाईबा | | | |
| २ | रुम्बा | | | |
| ३ | जीम्बा | फ्युबा, टुबा | | |
| ४ | गोङबा | | | |
| ५ | छ्याल्बा/ग्याबक/ग्याबा | | | |

**स्वाँगी ह्रुई -४**



अजितमान तामाङ

## वाअी थेन्बा

रसुवा, नुवाकोट, धादिङ, गोरखा, लमजुङका तामाङ समाजमा बालक जन्मेपछि *थापसाङ/डीपसाङ* गर्ने बेलामा नाम राखिन्छ। बालक वयस्क हुँदै गएपछि युवा तथा युवतीहरूले कुटुम्बेरी चल्ने र नचल्ने स्पष्ट छुट्याउन सकिने गरी आफैले आफ्नो उपनाम राख्नुपर्दछ। यसरी उपनाम राख्ने कार्यलाई *वाअी थेन्वा (थान्वा)* भनिन्छ। हाल यो *वाअी थेन्वा* प्रचलन तामाङ गाउँहरूमा हराउँदै गइरहेको अवस्था छ।

यसरी *वाअी थेन्वा* गर्दा दोङ, गोले, बल, तीदुङ, गाङदान *ङाहुअी* र यी *हुअीहरू*को पनि सम्पूर्ण *थेतगी/थेमेगी हुअीहरू*का तामाङहरूले आफ्नो *वाअी* 'उपनाम' सँगै पुरुष भएमा ग्रोङ (गुरुङ) जोड्ने गरिन्छ भने महिला भएमा वाती जोडिन्छ। उदाहरणका लागि उर्चा ग्रोङ, मार्चा ग्रोङ, सेर्चा ग्रोङ, गेजा ग्रोङ, खेचा ग्रोङ, टेर्चा ग्रोङ, पेग्रोङ आदि र महिलाहरूले उर्चा वाती, मार्चा बाती, सेर्चा बाती, तार्चावाती आदि *वाअी* राख्ने गरिन्छ।

यसैगरी योन्जन, बमजन, डुमजन, लोप्चन *ङाहुअी* र यी *हुअीहरू*का पनि *थेतगी हुअीहरू*को पुरुष भएका आफ्नो *वाअी*को पछाडि लामा र महिला भएमा लामो जोडेर *वाअी* राखिन्छ। उदाहरणका लागि पुरुषहरूको मार्चा लामा, सेर्चा लामा, उर्क लामा, गेजा लामा र महिलाहरूको भए मार्चा लामो, सेर्चा लामो, सीर्चा लामो आदि *वाअी* राखिन्छ। यसै गरी अन्य *ङाहुअीका*हरूले भने *वाअी*को पछाडि भने पुरुषहरूले *रोङ* र महिलाहरूले *वाती* नै जोड्ने गरेको पाइन्छ।







# तामाङ जातिको चिनारी

***जोम्पाकी ब्रेल्वा* 'विवाहको नाता सम्बन्ध'**

*म्हा-स्याङबोकी ब्रेल्वा* 'साला-भेनाको सम्बन्ध', *साली-म्हाकी ब्रेल्वा* 'साली भेनाको सम्बन्ध', *आस्याङ-कोनकी ब्रेल्वा* 'मामा-भान्जाको सम्बन्ध', *आङी-कोनकी ब्रेल्वा* 'माइज्यु र भान्जाको समबन्ध', *आस्याङ कोन्मेकी ब्रेल्वा* 'मामा भन्जीको सम्बन्ध', *आङी कोन्मेकी ब्रेल्वा* 'माइज्यु र बान्जीको सम्बन्ध', *म्रिङ-रेम्बोकी ब्रेल्वा* 'लोग्ने स्वास्नीको सम्बन्ध' आदि विवाहबाट बनेको नाता सम्बन्धहरू हुन् ।



# ५. तामाङ छ्योओी रीमठीम 'धार्मिक परम्परा'

## ५.१ छ्योओी 'धर्म'

तामाङ आदिवासीको मौलिक परम्पराहरूमध्ये *छ्योओी* 'धर्म' पनि एउटा पहिचान हो । तामाङ समाजमा धर्म दुई प्रकारको रहेको पाइन्छ । प्राकृतिक परम्परागत मौलिक रूपमा गर्दै मान्दै आएको धर्म र मानवसभ्यताको विकाससँगै विकास भएर आएको ज्ञानमार्गमा आधारित बौद्धधर्म ।

यही कारण धार्मिक मान्यताहरूको विविधता र महत्वलाई सन्मान आदर गर्दै तामाङ राष्ट्रभित्र धार्मिक छुट्टै व्यवस्थापन इकाई *छ्योओी ठीम* भनेर धर्मको परम्परा या धर्मले बसालेको राम्रा पक्षहरूलाई सँगालेर नियमनका रूपमा सधैँ श्रद्धा गर्ने गरेको पाइन्छ ।

तामाङ समाजमा परम्परागत रूपमा रहेको यी दुई धार्मिक अभ्यासलाई चरणबद्ध रूपमा अध्ययन गर्न सकिन्छ । स्थानीय सिमे, भूमेपूजा, *सीङो सान्डे* 'प्रेत-प्रेतात्मा', *म्हाङ* 'भूत', *खार्ता* 'विशाल पोखरीका मालिक', *सेर्काङ* 'दुलो सुरुङका मालिक' आदिलाई धुप, धुँवा, फूल अक्षता, दूध चढाउने, बलि दिने आदि धार्मिक कार्य प्रारम्भिक धर्मका कृयाकलापहरू हुन् ।

यी धार्मिक कृयाकलापहरू सम्पन्न गर्ने स्थानीय मौलिक धार्मिक परम्पराअनुसार *लाम्बु, लाप्ताबा, साङदुङ* आदि पुजारीहरूले पूजा सन्चालन गर्न गर्दछन् भने सङ्गठित र संस्थागत रूपमा पनि यही प्राकृतिक धर्मलाई *बोन्चो*को परम्पराले आजसम्म प्रभाव जमाउँदै आएको छ । मूलतः यो प्रकृति पूजासँग सम्बन्धित रहेको धर्म हो ।

त्यसैगरी संसार अनित्य छ भनेर परिवर्तन प्रगतिका पक्षमा ज्ञान मार्ग बताउने लामा गुरु पुजारी हुने बौद्ध धर्म आजको तामाङहरूको जीवन तामाङहरूको मेला नै लाग्दछ । यहाँ आफ्ना पिता पुर्खा तथा विगतमा बितेकाहरूको पुण्य लाभका लागि *डोवा* गर्न, *म्हारमे नाङसाल* बाल्ने परम्परा रहिआएको छ भने तामाङ पात्रोअनुसार *नाम्दुङ ङव्या* अर्थात् चैत्र पूर्णिमाका बेला एकदिन अगाडि बौद्धमा र पूर्णिका दिन स्वयम्भूमा बुद्धजयन्तीका रूपमा तामाङहरूले *तेमाल जात्रा* भनेर लगातार दुई दिनसम्म एकएक दिन जाग्राम नै बसेर तामाङहरूले धर्मको मेला भर्छन् ।



तामाङ वंशावलीहरूमा उल्लेख भएको *बोद* 'तिब्बत', *बालयुल* 'नेपाल' र *ग्याकारयुल* 'भारत' बौद्ध तीर्थस्थलहरूको वर्णन गरेको *लोर्ग्यु* 'आख्यान' पाइन्छ । तामाङ भाषामा तीर्थका गीतहरू, धर्मका गीतहरू *काल्पा ल्होग्युही मानी कावुम* जस्ता *जीक्तेन तामछ्यो* आदि तामाङ बौद्धसाहित्य आदिवासी परम्परा मौखिक तथा लिखित पाइन्छन् । नेपालमा भएका हिमाली बौद्ध परम्परामध्ये सबैभन्दा पुरानो सम्प्रदाय *ङीङमा* सम्प्रदाय हो । नेपालका तामाङहरूमा सबैभन्दा बढी यही सम्प्रदायको लामा तथा *गोन्पा*हरू रहेका छन् । तामाङहरू *गोन्पा*मा बस्ने नियमित पूजाआजा चलाउने लामालाई *कोङ्यार* वा *कोङ्यार्बा* लामा भनिन्छ । यसदेखि बाहेक हरेक तामाङ गाउँमा लामा रहेकै हुन्छ । नभएमा छिमेकी गाउँका लामा बोलाउने गरिन्छ ।

तामाङ लामाहरू पहिले निकै नै प्रभावशाली थिए भन्ने कुरा काठमाडौँका *बैखुला* लामाहरू ठमेल भगवान् बहालदेखि कीर्तिपुरसम्मका जनता लामा पाथी उठाउन पाउने सरकारी इस्तिहार जारी भएको कुरा बैखुका शम्भु लामाले बताए । उनका अनुसार हिउँदमा धान पाक्ने बेलामा असिना परेर धान नोक्सानी नहोस् भनेर *सेर्बा/सेरा* असिना रोक्न लामाहरूले *सेर्तो* 'फिरफिरे' हावाले पङ्खा बतास चल्ने स्थानमा बौद्ध विधिअनुसार गाडेर राखिन्थे । यसले असिना पर्नबाट रोक्थ्यो । यो काठमाडौँको चपली भद्रकाली,











### ५.१.१.३ साङ्दुङ:

हिमाली तथा उच्च पहाडी क्षेत्रमा प्रकृति पूजक पूजारीलाई साङ्दुङ भनिन्छ। साङ्दुङले पनि लाब्ताबा र लाम्बुले जस्तै गाउँमा बिरामी, रोगी भएकाहरूको प्राकृतिक तथा दैवी शक्तिको आडमा औषधो उपचार गर्ने गरिन्छ। साङ्दुङले बोन्पो जस्तो ढ्याङग्रो, फूर्बा, स्याङस्याङ रोल्मो आदि बिना नै स्थानीय भूगोल वरिपरिका सिमेभूमे देवता, भूत प्रेत आदि पन्छाउने मन्साउने गरिन्छ। साङ्दुङले लाब्ताबा र लाम्बुले जस्तै गाउँमा बिरामीको अध्ययन गरी कुन देवी देवता वा भूत प्रेतले गर्दा भएको सो निमित्त कखुरा वा भेडा, बाख्रा के चाहिने हो सो को बली पूजा गरेर गरिन्छ। कुखुराको बली पूजा दिँदा कखूराको कलेजो तथा पित्तमा परेको प्रभावबाट मानिसलाई यो भूत वा प्रेत या सीङो सान्डेले छुएको वा बिगार गरेको रहेछ विश्वास गरिन्छ। यसरी परम्परागत रूपमा बिरामीको उपचारमा साङ्दुङ संलग्न हुने गरेको पाइन्छ। साङ्दुङ परम्परा ताम्सालीङका रसुवा, धादिङको हिमाली भेगमा अझै जीवन्त रहेको पाइन्छ।





*रसुवा गोल्जोङ्का साङ्दुङ*

# तामाङ जातिको चिनारी

## ८. भौतिक संस्कृति

तामाङ जातिको मुख्य बसोबास स्थान हिमालय तथा पहाड भएकाले भौतिक संस्कृतिमा विविधता पाइन्छ। यसले गर्दा तामाङ जातिको भौतिक संस्कृतिलाई एउटा मात्र दृष्टिकोणबाट हेर्नु हुँदैन। त्यसकारण तामाङ जातिको भौतिक संस्कृतिसँग जोडिने घर घरायसी सामग्री, औजार, वेषभूषा, जीवनयापनसँग जोडिएका आदि भौतिक संस्कृतिमा पनि विविधता पाइन्छ।

### ८.१ *तामाङकी दीम/खीम/खाङपा/स्हीमखाङ स्हेङबा 'घरको संरचना'*

तामाङ घरहरू प्रायः एक सय वर्ष अगाडिसम्मका एक तले हुन्थ्यो। घरमा मुनीतिर भुइँमा गाईवस्तु, बाख्रो, कुखुरो आदि राख्ने बाँध्ने गरिन्थ्यो। माथिको तलामा आफू बस्ने, चुलो, अन्नको भकारी भन्डार, देवस्थान *ल्हाखाङ* सबै त्यही तलामा हुन्थ्यो। यस्ता घरहरू हिजोआज धादिङका तिप्लीङ, सेरतुङ, लापा, नुवाकोटका किमताङ, स्हाङगाम, रसुवाका गालाङ, गोलजोङ, हाकु, थङमेन, मोक्तान *नाम्सा*, सिन्धुपाल्चोकका गुम्थाङ, लिस्तीकोट आदि स्थानहरूमा केही घरहरू अझै यो संरचनामा नै बनेको हेर्न पाइन्छ। यस्तो घर चार कुना मिलेको ढुङ्गाको सुक्खा गारो लगाएको हुन्छ। छाना काठको फल्याक *पाङलेप/पाङलीङ*को हुन्छ। झ्यालढोकाहरू पनि कलात्मक हुन्छ।



*सिन्धुपाल्चोक नवलपुरको तामाङ दीम*

वन विनाशले *पाङलेप* बनाउने *काल्ता* तथा बोधाङका रुखहरू मासिएकाले अचेल करकट पाता, टिन तथा कतै पुरानै प्रकारको ढुङ्गाको छाना छाउने गरिएको पाइन्छ। अचेल दुईदेखि तीन तलासम्मको घर बनाउने गरेको पाइन्छ। सिन्धुपाल्चोक नवलपुरको तामाङ दीम रसुवा गोल्जोङको तामाङ दीम यस्तो घरमा सबैभन्दा माथिल्लो तलामा अन्नपात राख्ने, बिचकोमा आफू बस्ने, त्यही तला देवस्थान आदि रहेको हुन्छ।



*रसुवा गोल्जोङको तामाङ दीम*

भुइँतलामा चुलो, खाने पानी, कुटो कोदालो, हातहतियार र अचेल कुखुराको खोर पनि भुइँ तलामा राखेको हुन्छ भने घरको पिँडीमा बाख्रोको खोर, कुकुर पालेको भए कुकुर बाँध्ने गरिन्छ। घरको आँगनमा दार्ज्यु लुङता तथा धूप साङ बाल्ने स्थान पनि बनाएको हुन्छ। घरको ढोकाको माथि लामा लिपिमा लामाद्वारा हाते कागतमा छापेको मन्त्र अङ्कित गरेको चित्र टाँसेको हुन्छ। यो कतै-कतै ढोकाको चौकोसमा नै खोपेको पनि हुन्छ। भूइँ तलामा एउटा मात्र झ्याल रहेको हुन्छ। दोस्रो तालामा दलान र मटान बनाएको हुन्छ।



**स्हीमखाङ**

तामाङ जातिले आफू बस्ने स्थानलाई दीम वा *स्हीमखाङ* भनिन्छ। यसैलाई हिमाली क्षेत्रमा *खाङ* भनिन्छ। राज्य प्रमुखको घरलाई *ग्यालखाङ* तथा





# तामाङ जातिको चिनारी







रेन्जा थारा
फुर्बा
चाछो
पे
ठेटीसीङ
ताल-सीङ
म्हः टुप
(ताना धागो)
दा-सीङ
दासीङ
पोगो ड्याम्ड्या
(नामे)
पोगो छो
तीङलीङ
(कीलीङ)
च्यालामाला
(याङदा)
नाटुप-पे
राबा जीन्बाला
बान(तोकोरोक)
फीङी
थुरी(बाना धागो)
पेते-पे
छोदा
बेर्मासीङ
बेर्मा फुर्बा
कुपार २६




# ९. तामाङ *ग्लेठीम/ग्याल्ठीम* 'राजनीतिक प्रणाली र इतिहास'





ऐतिहासिकताका दृष्टिले तामाङ आदिवासीको मौलिक खालको राजनीतिक संरचना तथा राजनीतिक भूगोल समेत रहेको पाइन्छ । यसमा 'बाह्र तामाङ' बाह्र विभिन्न गाउँ वा बस्ती वा क्षेत्रको संयुक्त केन्द्रीय सङ्घ अर्थात् सङ्घीय प्रणाली तामाङ राजनीतिक प्रणालीको एउटा महत्वपूर्ण अङ्गको रूपमा रहेको पाइन्छ । यसलाई आजको अवस्थामा ताम्सालीङलाई तामाङहरूले नेपालको छुट्टै सङ्घ राज्य बनाउन राजनीतिक रूपमा स्थापितसम्म गराउन सफल भइसकेको छ । नेपालको आदिवासी जनजातिहरूको मौलिक र प्राचीन राजनीतिक प्रणाली पनि हो । तामाङहरूको मौलिक राजनीतिक प्राचीन सङ्घीय प्रणालीको गोर्खाली खस जातीय एकात्मक केन्द्रीकृत औपनिवेशिक शासन प्रणालीको उत्पीडन दमनका माझ पनि नेपालको यो विगत २५० बर्षदेखिको राजनीतिमा पनि तामाङ जातिले आफ्नो छुट्टै पहिचान युक्त राजनीतिक भूमिका बनाइआएको पाइन्छ । यसमा *चाङग्ये ग्ले* देखिको भर्खरको २०१७ सालको खनियावास विद्रोहदेखि १० वर्ष सशस्त्र जन विद्रोह/जनयुद्धमा तामाङ युवाहरूले गरेको साहसी र बलिदानी भूमिकालाई महत्त्वपूर्ण राजनीतिक गतिविधिको रुपमा हेर्न सकिन्छ । यो योगदान पनि तामाङ जातिको मौलिक राजनीतिक प्रणालीको स्थापनासँग पनि जोडिएको छ ।

## ९.१ *ग्लेठीम*को इतिहास

तामाङ राजनीतिक इतिहासको कुरा गर्नु पर्दा सबैभन्दा पहिले प्राचीन तामाङ राजनीतिक प्रणालीको उत्खनन् गर्नु पर्ने हुन्छ । यसमा प्राचीनकालदेखि चलिआएको तामाङ *च्युङनी* 'बाह्र तामाङ' को संरचनाको अध्ययन गर्न जरुरी छ । यसको खोजी र विश्लेषण गर्ने हो भने यसको इतिहस ईसाको दोस्रो-तेस्रो शताब्दीसम्म पुग्दछ भने त्यस बेलादेखि आजसम्म आइपुग्दा विभिन्न कालखण्डमा तामाङ राजनीतिक प्रणाली र अवस्थाहरूलाई देहाए अनुसार



# तामाङ जातिको चिनारी

**प्राचीन तामाङ *ग्लेठीम*का स्वरुप**

प्राचीन तामाङ *ग्लेठीम* राजनीतिक प्रणालीको खोजी गर्दा 'तामाङ *च्युङनी*' भन्दा पुरानो *ग्लेठीम*को पहिचान गर्न सकिएको छैन। यो पूर्णतया सङ्घीय संरचना अर्थात् स्वरुपमा आधारित छ। यसको संरचना बुद्धकालीन समयको 'स्वडस जनपद' तथा 'महा जनपद' हरूसँग तुलना योग्य छ। यो स्वरुप नेपाल अझै आधुनिक राज्यको पहुँचबाट टाढा मुस्ताङलगायत तामाङ समुदायभित्र अवशेषको रुपमा पाइन्छ। यसको समग्र रुपमा पर्याप्त सामग्रीहरू फेला पार्न नसकिए तापनि तामाङ जातिको वंशावलीहरू, मौखिक इतिहास, सदियौंदेखि निरन्तर चलिआएको लोक इतिहास तथा लोक गाथाका गीतहरूमा यत्रतत्र अझै प्राचीन तामाङ *ग्लेठीम* तामाङ *च्युङनी*को बारेमा विभिन्न सन्दर्भ तथा राजनीतिक प्रणालीको स्पष्ट चित्र दिने खालको वर्ण तथा चित्रणहरू भने पाइन्छ। यसैको आधारमा प्राचीन तामाङ राजनीतिक प्रणाली तथा स्वरुपहरूको इतिहासको उत्खनन गर्न प्रयास यहाँ गरिएको छ।



**बाह्र तामाङ *छोक्पा***

बाह्र जना तामाङ सभासद् वा जन प्रतिनिधि रहेको *छोक्पा* 'सभा' जो विभिन्न क्षेत्र, गाउँ वा बस्तीको जनताको आधिकारिक प्रतिनिधिसभा हो। यो तामाङ, मगर, लिम्बु थारु, नेवारलगायतमा पनि पाइन्छ। नेपालको मुस्ताङ जिल्लामा अद्यापि यो परम्पराको जीवन्त अभ्यास भइरहेको छ। यसलाई ईशा पूर्वकालको कौटिल्यको अर्थशास्त्रमा समेत बाह्र गाउँको रुपमा उल्लेख भएको पाइन्छ। यी बाह्र गाउँका जनप्रतिनिधि सभाको रुप नै तामाङ जातिमा बाह्र तामाङ हो।

**बाह्र *तेमाल***

तामाङ, मौखिक इतिहास तथा तामाङ वंशावलीहरूमा उल्लेख भएका तामाङ राजा रिन्जेन दोर्जेको राज्य भएको स्थान *तेमाल* क्षेत्र आसपासको बाह्र गाउँ समेटिएको बाह्र तामाङीय राजनीतिक प्रणाली भएको क्षेत्र भएकाले नै त्यो सङ्घ राज्य वा गण राज्यलाई बाह्र *तेमाल* भनिन्छ। यस अन्तर्गत काभ्रे जिल्लाका *दाप्चा*देखिको आसपासको गाउँ क्षेत्रहरू पर्दछ।

**बाह्र *लच्याङ***

तामाङ जातिको इतिहासमा ककनीमा रुम्वा राजाको राज्य भएको मौखिक इतिहास अझै रहेको छ। काठमाडौंदेखि उत्तर र उत्तर पश्चिम क्षेत्रको बाह्र

**बाह्र *गोस्याङ***

नुवाकोट जिल्लाको पश्चिमदेखि धादिङ, गोर्खा, लमजुङसम्म यस सङ्घको क्षेत्र रहेको कुरा अध्ययनले देखाएको छ। यस सङ्घ अन्तर्गत तामाङ *अुओीवा* राजा *दागुर* सङ्घ नायक अन्तिम शासक भएको स्थानीय जनताले भन्ने गरेको पाइन्छ। यसको राजधानी *सेमजोङ* अझै भग्नावशेषहरू देख्न/हेर्न पाइन्छ।

# तामाङ जातिको चिनारी

अवसर नै हुँदैन। त्यसकारण त्यसको बेलाका गीतकारहरूले समेत बाह्र तामाङको महिमा गाएको पाइन्छ। उदाहरणका लागि *ताम्बा काओतेन क्याओ रीमठीम*का एउटा गीतको अन्तरामा यसो भनिएको पाइयो।

*"......योल्मो गाङला क्युअी लीङमु।*
*बाह्र तामाङला काओथेमा।*
*सेमला हुकु सीलीङमु।....."*

अर्थात्

१२ तामाङको आवाजको सुन्दा योल्मो डाँडोको पानी छछल्की यो मनमा बाङुली नै सिलिङलिङ भयो। यसले भन्न खोजेको कुरा प्रष्ट बाह्र तामाङहरूले गरेको निर्णय यत्तिका कडा र कठोर छ कि त्यो निर्णयले योल्मो डाँडोमा रहेको पानी समेत छचल्किन्छ। जसले मनमा लागेको बाङुली नै खोली दिन्छ।

## ९.२. प्राचीन कालपछिको तामाङ राजनीतिक इतिहास

यो काल भनेको मुख्यतया गोर्खाली राज्यको हस्तक्षेप अघिदेखि आजको ताम्सालीङ स्वायत्त राज्यको मागसम्मका अवस्था हो। यहाँ यसकालसम्म आइपुग्दा भएका तामाङ राजनीतिक सङ्गठन, प्रणाली तथा तामाङहरूको राज्यमा रहेको भूमिका र तामाङ राजनीतिक आन्दोलनका घटनाहरू चर्चा गरिने छ।

## ९.३ तामाङ ग्ले तथा *ग्याल्सहरू*

गोर्खालीहरूको राज्य स्थापना अघिदेखि नै तामाङहरूको सङ्घीय स्वरुपका राज्य तथा राजनीतिक भूगोल, राजनीतिक प्रणालीहरू भएको कुरा तामाङ जातिको वंशावलीहरूमा रहेको वर्णहरूले नै स्पष्ट पार्दछ। वंशावलीहरूअनुसार हालको चीनको तिब्बतको दक्षिण पश्चिम मानसरोवर निकट रहेका *स्याङस्युङ* युल्सा, त्यसैको नजिकका पुराङ, नेपालकै हालको मुगु जिल्लालगायतमा तामाङ जातिको सङ्घ राज्य भएको कुरा झल्किन्छ। त्यस्ता तामाङ सङ्घ राज्यहरू निम्नानुसार रहेको पाइन्छ।

## ९.४ परम्परागत न्यायप्रणाली र दण्ड व्यवस्था

तामाङ समाजमा रहेको न्यायप्रणाली तथा दण्ड व्यवस्था स्थानीय सामाजिक परिवेशअनुसार रहेको पाइन्छ। यसको मुख्य वैधानिक प्रकारको सङ्गठनको रुपमा बाह्र तामाङ छोक्पा (सभा council) बाह्रजना तामाङ सभासद् वा जन



## १०. तामाङ युल्बाला व्हाआी (लोक गीत, सङ्गीत)

तामाङ समाज अत्यन्त लोक संगितमय पाइन्छ। तामाङ समाज भित्र विभिन्न प्रकारका गीत तथा सङ्गीतहरू रहेको छ। जसमा गाथा, लोक गीतहरू, दोहरी, नृत्य सहितको दोरा तथा स्याब्रु, नाटक (कीर्बा क्लाङबा गाआीरा धादिङ), छेज्यु, दोआीला बनाउने, लघु नाटक, हास्य-व्यङ्ग्य, मारूनी आदि प्रदर्शनकारी लोक कला तथा लोक सङ्गीत हाल पनि प्रचलनमा पाइन्छ।

### १०.१ संस्था र सञ्चालक:

छेज्यु, दोआीला यो सँग सम्बन्धित संस्थामा चोहो, गाअुरूङ, छ्याङबा, कर्बा, कटाअुके सहितको दलले तीनको सञ्चालन गर्ने गर्दछ। यसलाई रीमठीम ग्हेदुङ भनिन्छ। यसका लागि दाता वा जुन गाउँमा कार्यक्रम हुने हो त्यही गाउँमा घरै पिच्छे सघाउ उठाउने गरिन्छ। यसैबाट कलाकार तथा स्वयम सेवकहरूलाई नास्ता तथा खाना खुवाउने गरिन्छ। धादिङ जिल्लाका लापा गाउँमा भने छिमेकि गाउँका अतिथीहरूलाई समेत आयोजक संस्था वा गाउँका ग्हेदुङले नै गाउँमा जात्रा वा मेला चलि रहेसम्म खाना र बस्ने व्यवस्था मिलाएको हुन्छ। सांस्कृतिक पक्षहरू

### १०.२ परम्परागत लोक गीत:

तामाङहरू गितलाई व्हाआी वा लु भन्दछ। वारवार व्हाआी, लु, छेर्लु, चोम्लु, यार्तेन लु, गित सँगै नाच्नेलाई स्याब्रु, दोरा, मानेस्याबा आदि भनिन्छ। भने गित संगितमा प्रयोग हुने रोल्मो(बाजाहरू) डामङ्यान (टुङना), पीवाङ(सारङगी), डाम्फा(डम्फू) गोङगाप(बिनायो), फुन्दी(मादल), ङ्हा(ड्रम) आदि हुन्छ। तामाङ लोक सङ्गीतलाई नृत्य र गायन सँगै हुने भएकाले नै स्याब्रु नृत्य र लु गीत दुइ शब्दहरूको बीचमा सन्धी भएर नै स्याब्रुलु बाट स्यालु भइ स्यालु बाट सेलो हुन गएको हो। आज तामाङ सेलो बनेपछि जनसमुदायमा अत्यन्त लोकप्रिय छ।

### १०.२.१ परम्परागत लोक गाथा गीत:

सांसारिक सृष्टि तथा तामाङहरू परम्परागत कला कौसलका बारेमा गीति माध्यमबाट समुदायलाई सुनाउने र त्यो परम्परालाई एक पुस्ताबाट अर्को पुस्तामा हस्तान्तरणका लागि यस्तो गीति परम्परा चली आएको पाइन्छ।

### १०.२.२.१ बोमसाङ व्हाआी

परम्परागत संस्कार तथा संस्कृति, संसारको सृष्टि, उत्पत्तिका बारे तीन दिन चार दिन सम्म चल्ने पुरानो गाथाहरू, त्यसै गरी अन्य विभिन्न संसारिक भौतिक कृयाकलापहरू तथा इतिहास र महत्वको पक्षलाई उजागर गर्न लाङबो ताप्पा, लीङमा आदि जस्ता गीतहरू परम्परागत गाथा शैलीका गीतहरू हुन्।

### १०.२.२.१.१ लाङबो ताप्पा व्हाआी:

खेत, बारीको माटो खेतीका लागि माटोलाई तयारी गर्दा गोरु जोत्ने बेलामा गोरुलाई र माटो मुनी रहेका देखिने नदेखिने गड्याउला लगायतका जमीन मुनीका जीवहरू बासस्थान नास हुने, जीवको हत्या आदि विषयको उठान गरी त्यस प्रतिको क्षमा याचना, श्रद्धा गर्दै बाध्यताका बारेमा अनुरोध गर्दै गाउने गीतलाई लाङबो ताप्पा भनिन्छ। यो रसुवा, नुवाकोट, धादिङका उत्तरी क्षेत्रका तामाङ गाउँहरूमा आज भोलि पनि यदा कादा कार्तिक-मङसिर तिर पुग्यौ भने सुन्न पाईन्छ।

### १०.२.२.१.२ लीङमा व्हाआी:

नुवाकोट, धादिङका तामाङ गाउँहरूमा मकै गोड्ने बेलामा एक जनाले भट्याउने र अरूले सामूहिक रूपमा लीङमा हो लीङमा भनेर साथ दिँदै मकै गोड्ने बेलामा र धादिङ जिल्लाका लापा, री लगायतका गाउँहरूमा वर्षादका लागि दाउरा संकलन गर्न जाँदा दाउराको भारिका साथ लस्करै फर्कँदा पनि यो लिङमा गाउने गरिन्छ।

### १०.२.२.२ ताम्बा काआीतेन व्हाआी:

संसांरिक सृष्ठि गाथा, मौखिक इतिहास, सांस्कृतिक परम्परा विवाह, छेवर आदि संस्कारहरूमा गाउने गीत हो।

### १०.२.२.२.१ सृष्टि गाथा ताम्बा व्हाआी:

मौखिक इतिहास, संसारिक उत्पत्ति, डाँडा काढाँको उत्पत्ति, पानी नदि नालाको उत्पत्तिका बारेमा गाउने गीत हो।

### १०.२.२.२.२ साङ्हाबा व्हाआी:

विभिन्न धार्मिक कर्म तथा संस्कारका कार्यहरू गर्नु अघि 'पोआीमा कुसे साङला, पोआीमा कुसे साङो' भनेर विभिन्न नौ धुपका वर्णन गीतमा गरि सो धुपको बास्नाले कुसल गरून भन्ने गाथाले भरिएको गाथा गीत हो 'साङ्हाब' व्हाआी। यसै गीतको वर्गमा बुम्बा सील्बा (कलस चोक्याउने), कपडा, खाना, पानी चढाउने आदि प्रकारको गीतहरू हुन्छ।

### १०.२.२.२.3 नाम्दर व्हाआी

विभिन्न बाजाहरू डाम्फा, डाम्ङ्यान, पीवाङ, गोङगाप, मोजाङ्गा, फुन्दी, स्याङस्याङ रोल्मो, ङ्हा आदिको ठङबा (उत्पत्ति) का गाथा समेटिएको गीतहरू लाई "नाम्दार व्हाआी" भन्ने गरिन्छ।

## १०.३ प्रदर्शनकारी लोक कला:

तामाङ समुदायमा लोक गीतका साथै प्रदर्शनकारी लोक कला पनि पाइन्छ। तामाङ प्रदर्शनकारी लोक कलामा गीत सहितको नृत्यहरू स्याब्रु, दोरा, सेलो प्रमुख हुन भने तामाङ समुदायमा ताम्सालीङको काभ्रे, सिन्धुपालचोक, रामेछाप दोलखा भेगमा दोओीला पुजा गर्ने र रसुवा नुवाकोट, धादिङ जिल्लामा छेस्युग, म्हाने जात्रा, म्हेन्दो माया आदि नृत्यहरू जो विभिन्न जात्रा मेला तथा महान चाड ल्होछारका उत्सवमा प्रदर्शन गरिने प्रद्रशनकारी लोक कला हुन्।

### १०.३.१ दोओीला:

यो ३ देखी ७ दिन सम्म विभिन्न नृत्यहरूको साथमा परम्परागत पुजा आयोजना गरी पुरै गाउँमा सप्ताह भरी नै मेला जस्तो जात्रा मनाउने गरिन्छ।

### १०.३.२ छेस्युग:

दोओीला जस्तै तर दोओीलामा जस्तो छुट्टो देउता नबनाएर प्रत्येक दिन विभिन्न प्रकारका सडक नाटक तथा नृत्यहरू प्रदर्शन गरिने पर्वलाई छेस्युग भनिन्छ। यसमा ता चेमा(घोडा नृत्य), या चेमा( याक नृत्य), यार्तेन चेमा(भेषभुषा प्रदर्शनी नृत्य), डाब्ला चेमा( खुँडा खुकुरी नृत्य), डोवा चेमा, तेन्गी चेमा, बाओीस्या चेमा, कीराल्बा, लामा, जोगी, सिकारी आदि नाटक तथा हास्य व्यङ्ग समेतको प्रदर्शन कारी लोक कला प्रस्तुत गर्ने गरिन्छ।

### १०.३.३ म्हेन्दो माया:

नुवाकोट तथा धादिङ जिल्लामा केटा र केटी दुई समूहमा दोहरी गीत गाउँदै नाच्ने प्रदर्शनकारी लोक कला हो।

### १०.३.४ दोरा:

यो पनि तामाङ युवा युवति होस या वृद्ध सबै उमेर समूहकाहरू एकै ठाउँमा एक जनाले दोरा गीत गाउने भट्याउने र अरूले स्वरमा स्वर मिलाएर दोहऱ्याएर भन्ने गर्दै नाच्ने गरिन्छ। यसमा सबै जना एक आपसमा अङ्कमाल गरेर एकै पटक लहरैमा नृत्य गरिन्छ।

### १०.३.५ स्याब्रु:

यसमा पनि दोरामा जस्तै गोडा बजारेर केटा र केटीहरू लामो लहरमा अङ्कमाल गरेर गीत गाउनुको साथै नृत्य गरिन्छ।

## १०.४ तामाङ लोक बाजा:

तामाङ लोक बाजामा मुख्य गरेर डाम्फू, डाम्ङ्यान, पीवाङ, गोङगाप, मोरली, पुली, मोजाङ्गा(मुर्चुङगा), ङा छेलेम, रोल्मो, स्याङ आदि हुन।

(तामाङ लोक गीत, सङ्गीतला ल्होग्यु थुम्जी)



# ११. तामाङ ग्योत/ग्योअी थेन यीग (भाषा  र लिपि)

त्यसैगरी भाषावैज्ञानिकहरुका अनुसार नेपालमा बोलिने उच्च पहाडी हिमालय भाषाहरु मध्ये तामाङ एक पुरानो भाषा हो। जनगणना २०५८ ले नेपालमा ९2 भाषाहरू देखाएको छ। यी भाषाहरूलाई नेपालको अन्तरिम संविधान-२०६३ ले राष्ट्रियभाषाको मान्यता दिएको छ। हजारौं वर्ष पहिले तामाङ जाति र भाषाको जन्म वर्तमान चीनको तिब्बतस्थित 'यार्लुङ' नदी आसपासका सभ्यतामा विकास भएको मान्दछन्, जहाँ दर्जनौ 'बोद वा बोदीक' भाषाहरुको जन्म तथा विकास भएको मानिन्छ।

काठमामाण्डौ उपत्यकाको मानव सभ्यताको विकास बारे काठमाण्डौ उपत्यकामा भएका अन्वेषनमा प्रागैतिहासिक पुरातत्वकि अन्वेषकहरूले भेट्टाएका३० हजार वर्ष अगाडीको मंगोलायड पेकिङ मानव आकृति नेपालका मंगोलायड जाति तामाङका हुन भन्ने विज्ञहरूले लगाएको अनुमान र चिनका पेकिङबाट फैलिएका हानहरूको भाषाको तानीय चरित्र र तामाङ जातिको तत्वीय खगोल तथा ज्योतिषशास्त्र अनुसारको सांस्कृतिक पर्व चिनिया परम्परागत नयाँ वर्ष पर्व ल्होछार समेत ठ्याक्कै मिल्नुलाई पनि तामाङ भाषाको ऐतिहासिकता र प्राचीनताको गहन अर्थपूर्ण दृष्टकोणबाट्हेर्न सकिन्छ।

तामाङ वंशावली अनुसार **स्याङस्युङ युलरी स्याङबो बाप** भन्ने उल्लेख गरेको पाइनु र ताम्सालीङका दोलखा जिल्लाको सदरमुकाम चरिकोट बजारमा अवस्थित प्राचीन चरी घ्याङ गोन्पामा रहेको तामाङ बौद्धहरूव ग्रन्थ **स्याङस्युङ केअीदु** पाइनुले पनि तामाङ गोत्र स्याङबोको बाब्सा(उद्गम स्थान) र तामाङसँग **स्याङस्युङ केअीदु**को यो सम्बन्धले चिनिया तिब्बत क्षेत्रमा उत्तरी बौद्धधर्म पुग्नु अगाडी नै **स्याङस्युङ केअीदु** रचना भइसकेको थियो भन्ने संकेत दिन्छ।तसर्थ तामाङ भाषाको उत्पत्ति तथा विकासको काल उत्तरी बौद्धधर्मको वर्तमान साहित्य भन्दा पुरानो भएको पुष्टीहुन्छ।

भाषाविज्ञानको ऐतिहासिक पुनरसंरचना (Historical Reconstruction) अध्ययन विधिको आधारमा तामाङभाषा तिब्बती भन्दा पनि पुरानो भाषा मान्न सकिन्छ। उदाहरणको लागि रुअीछेन च्योप्गे, जीक्तेन तामछ्योअी, कुक्पा खाछ्योअी आदि तामाङभाषाको पुरानो लिखित सामाग्रीहरुमा བོད་ बोद, གྲ་ क्रा, བྱོན་ ब्योन, ཕྲེང་ फ्रेङा, ཕྲེང་བ་ फ्रेङबा, ཁྲུ་ཨི་ ख्रुअी, གྲམ་བ་ ग्राम्बा आदि तामाङ शब्दहरुको तुलनात्मक पुनःसंरचनाको अध्ययन गरेमा ती शब्दहरु तिब्बती भाषामा क्रमसः 'बोद' बाट बोअी, क्रा बाट टा, व्योन बाट ज्योन, 'फ्रेङा' बाट ठेङा, फ्रेङबा बाट ठेङबा, ख्रुअी बाट ठुअी, ग्रम्बा बाट डाम्बा मा विकास अथवा ध्वनिमा परिवर्तन भएको पाइन्छ त्यसै गरी तामाङ भाषामा **हीन्बा**, **हीन्ना** को **यीन**, **ल्हो** को **लो**, तर तामाङभाषामा अहिले पनि लेख्य र ध्वनिरुप परानै आदि रूप (Proto form) बोद, क्रा, ब्योन, फ्रेङा, फ्रेङबा ख्रअी, ग्राम्बा, हीन्बा....आदि त्यही अर्थमा प्रयोग

## ११.१ तामाङ भाषाको नाम:

मानवजातिले एक आपसमा आफ्नो विचार विनिमय गर्दा जुन ध्वनि वा आवाजलाई उपयोग गर्दछ, जसलाई हाम्रो कानले सुन्न सक्दछ, त्यसलाई कात/काअी ग्योत/ग्योअी (भाषा) भनिन्छ। तामाङहरू आफ्नो ह्युल्बा-ह्युल्बा (समाज-समुदाय) बीच आफ्नो भाव वा विचारको आदानप्रदान गर्न प्रयोग गरिने बोली वा ध्वनि समूहलाई "तामाङ ग्योत/ग्योअी"(तामाङभाषा) भनिन्छ। यसलाई "तामाङताम, तामाङकाअी वा तामाङकेअी" वा "तामाङ खाताम वा खाकेअी, खाछ्योअी" भनिन्छ। यही तामाङभाषा नै तामाङ जातिको मुख्य पहिचानको आधार हो। तापनि तामाङ बाहेकका लेखक तथा अन्वेषकहरूले तामाङ जाति र भाषालाई बुझाउन विभिन्न नाम संज्ञाहरू प्रयोग गरिएको पाइन्छ। 'मुर्मी', 'इसाङ', 'सैंन', 'लामा', 'ग्लेभोटे(घलेभोटे'), 'लामाभोटे', 'भोटे', 'भोटिया', 'लोपा', 'कागते', 'ग्युबा', 'योल्मा', 'काअीकेअी'(काअीके) 'स्यार्पा', आदि नामको प्रयोग गर्ने गरेको भेटिन्छ(छारग्याम:२००५:१३:१३:८)। विशेषगरी भारपेली भाषा बोल्नेहरुले लेख्दा र भन्दा, नेपालमा तामाङ जाति र तामाङभाषीहरुलाई भोटे अर्थात् बोद (भोट निवासी वा भाषी) वा **ब्होटीया** भनेर उल्लेख गरिएको पाईन्छ, त्यसैगरी नेपाल सरकारको पुराना इस्तिहार, लालमोहर, सनदपत्र आदि लिखित सामाग्रीहरुमा तामाङभाषी वा तामाङ जातिलाई **'लामा, 'लामाभोटे, 'भोटे, 'ब्हुटीया** भनेर उल्लेख गरेको पाइन्छ[1]। किनभने तामाङ भाषाक

ताम्बा लिखित तथा मौखिक साहित्यहरू अनि रसुबा, नुवाकोट, धादिङका पुरानो तामाङ गाउँहरूमा तामाङ संस्कार र संस्कृतिहरूमा प्रयोग भएको तामाङभाषा हुम्ली-तामाङ, मुगाली(कर्मारोङबा), केरोङबा, मनाङबा, थकाली, चुम्बा भाषासँग मिल्छ[2]। तसर्थ तामाङभाषालाई बुझाउन' बोद(भोट) नाम प्रयोग भएको

यही आधारमा भाषा वैज्ञानिकहरूले तामाङभाषालाई समग्र 'बोद'  (तिब्बती/हिमाली), 'बोद वा बोदीक' भाषापरिवारको मुलभाषाका रूपमा लिएको पाइन्छ।

## १.३ तामाङ भाषाको तानीय चरित्र:

तामाङ भाषाका तानीय चरित्रका सम्बन्धका बारेमा मिसिनरीहरूको भाषा अनुसन्धानकर्ता अष्ट्रेलियाक डोरिन टेलर, फ्रान्सका मार्टिन मजाउदिन, मारिया हारी आदिले गरेको अध्ययनले तामाङ भाषा तानीय भाषा हो भन्ने प्रमाणीत भएको छ। हाम्रो कार्यशालामा छलफल हुँदा तामाङभाषाको तानलाई आधारभूत रूपमा निम्न ४ प्रकारका तानहरूको सामान्य पहिचान गरियो।

( क) उच्च तान (High)= ˥ , **/ma/** (mama) female नाक मामा(=कुखुरी)
(ख) मध्य उच तान (Mid-High)= ˦ , **/ma:/** bamboo मा:(=निगालो)
(ग) मध्य तान (Mid)= ˧, **/mha/** stem दोङल म्हा(=रूखको काण्ड )
(घ) नीच तान (Low)= ˨, **/mha:/** son-in-law जमे म्हा:(=ज्वाँई )

(क) उच्च तान (High)= ˥ , **/ka/** blood का(=रगत)
(ख) मध्य उच तान (Mid-High)= ˦ , **/ka:/** thread का: (=धागो)
(ग) मध्य तान (Mid)= ˧, **/k-ha/** kaka काका(=सिमल )
(घ) नीच तान (Low)= ˨, **/k-ha:/**[kaba]Thickness क्हा:बा बाप (=बाक्लो जाँड)

(क) उच्च तान (High)= ˥ , **/nga/** mantra ङाह् ङा(=मन्त्र )
(ख) मध्य उच तान (Mid-High)= ˦ , **/nga:/** I ङा (= म
(ग) मध्य तान (Mid)= ˧, **/nga/** five ङ्ह (=पाँच)
(घ) नीच तान (Low)= ˨ , **/nga:/** Drum ङ्ह: (=ढ्याङ्ग्रो)

(क) उच्च तान (High)= ˥ , **/मार/** mantra मार (= मार)
(ख) मध्य उच तान (Mid-High)= ˦ , **/ma:r/** मार: (=तल)
(ग) मध्य तान (Mid)= ˧, **/mhar/** Gold म्हार (=सुन)
(घ) नीच तान (Low)= ˨ , **/mha:r:/** Butter म्हा:र (=घ्यु)

## ११.४ तामाङ भाषाको वंश:

तामाङ भाषाको विदेशीहरूले सन् १८१९ देखिनै अध्ययन अनुसन्धान गरि आएको देखिन्छ। भाषा वैज्ञानिकहरूले तामाङहरूको तामाङ भाषालाई चिनिया एकाक्षरी परिवार भित्रका तीन शाखा मध्ये भोटबर्मेली शाखा भित्रको भोट हिमाली परिवार अन्तरगत वर्गीकरण गरेकाछन्।




ग्रियर्सन १९०२-ले हिमाली परिवारको असर्वनामिक समूहमा र 'शेफर-१९६६- र ग्लोभर-१९७०-ले बोदीक समूहको बोदीस शाखा अर्न्तगत गुरूङ हाँगामा वर्गिकरण गरेका थिए। तर माइकेल नुनम(२००३)ले तामाङ भाषालाई भोट हिमाली परिवार अन्तर्गत तामाङगीक परिवारको भाषाको रूपमा वर्गीकरण गरेका छन्।

# तामाङ जातिको चिनारी

| **तामयीग *देबनागरी*** लिपिमा तामाङ वर्ण | तामाङ **तामयीग *उछेन*** लिपि तामाङ वर्ण | तामाङ उच्चारण/हिज्जे | तामाङ उच्चारण/हिज्जे रोमन लिपिमा |
|---|---|---|---|
| क | ཀ་ | का | kā |
| ख | ཁ་ | खा | khā |
| ग | ག་ | गा | gā |
| ङ | ང་ | ङा | ŋā |
| ट | ཊ་ | टा | Tā |
| त | ད | ता | tā |
| अ | ཨ་ | आ | ā |

| | | | | |
|---|---|---|---|---|
| ཨ་+ཨ=ཨ་ | ཨ་+ ི=ཨི་ | ཨ་+ ུ=ཨུ་ | ཨ་+ ེ=ཨེ་ | ཨ་+ ོ=ཨོ་ |
| अ+अ=**आ** | अ+ी(इ/ई)=**अी** | अ+ु(उ/ऊ)=**अु** | अ+े (ए)=**अे** | अ+ो(ओ)=**ओ** |

| | | | |
|---|---|---|---|
| ཨ་ཨི་ | अअी(**आअी**) | *आइ* | *तिमी* |
| ཨ་ཨི་ལ་/ཨེ་ལ་ | अअील /अेल (**आअीला**) | *आइला* | *तिम्रो* |
| ཨུ་ | उ (**अु**) | ***उ*** | *ओढार* |
| ཨུ་སྱུབ་ | अुस.युप. (**अुस्युप**) | *उस्युप्* | *उखु* |
| ཨེ་ | ए (**अे** ) | ***ए*** | *तिमी* |
| ཨེ་ཙེ་/ཨེ་སེ་ | एचे / एसे (**अेसे**) | *एचे / एसे* | *तिमीले* |
| ཨོན་མ་ | ओन.म (**ओन्मा**) | ***ओन्मा*** | *अघि, उहीले* |
| ཨོ་ནེ་ | ओने | ***ओने*** | *अस्तीनी* |

## १२. तामाङ ग्योतकाअी (तामाङ भाषाको साहित्य):

तामाङ भाषामा कहिएको, भनिएको, लेखिएको कुनै पनि ग्रा(घटना), कालक्रमिक बृतान्त, ब्रीताम(लेख रचना), ल्होर्ग्यु ( आख्यान), नाम्दार(कथा), व्हाअीखा(कविता), चेमा(नाटक), व्हाअी(गीत) आदि तामाङ भाषाका ग्योतकाअी(साहित्य) हुन।

## १२.१ ओन्माला तामाङ ग्योतकाअी (प्राचीन साहित्य):

तामाङ साहित्यमा प्राचीन साहित्य भन्नाले तामाङ जातिको धार्मिक तथा सांस्कृतिक विकास सँगै भएको लिखित विकासले जन्माएका ग्रन्थहरू पर्दछ। जब तिब्बतमा राज्यको संस्कृत बौद्ध साहित्यका अनुवादको माध्यमबाट तिब्बती बौद्ध साहित्यको विकास गरे भौगोलिक रूपमा निकट तामाङ भूगोलमा पनि यसको प्रभावकै कारण तामाङ भाषाले आफ्नो गौरव गर्दै आएका "जीक्तेन तामछ्योअी"हरू श्रुति परम्पराबाट लेख्य परम्परामा आएको देखिन्छ। जो लेख्य परम्परामा आए त्यसमा पहिले त्यो श्रुति परम्परामा थियो भन्ने अवशेष पाइन्छ। तामाङ ह्रुअीहरूको बाब्सा र ह्रुअीगी फोलाहरू बताएर टुङगिएको स्थानमा यसो लेखिएको छ।

...'ह्रुअी ङान चुर्कु ङीला बाब छुल जोकजी। हितासी दोसी लोर्ग्यु सुर गीक ङ्यान सान्सी स्युगो।...." अर्थात् ४२ ह्रअीको उदगम क्रम बताइ सकियो अब आख्यानको एक छेउ सुनि दिनु हुन अनुरोध गर्दछु। ( जीक्तेन तामछ्योअी:२००५:९९)।



## १२.१.१ तामाङ दोङह्लाप/फाह्लाप(वंशावलीहरू):



खास गरेर तामाङ वंशावलीहरू नै प्राचीन तामाङ साहित्यका मुख्य ग्रन्थहरू हुन। यहाँ तामाङ वंशावली भन्नाले यसको सग्लो पुस्तकारमा शास्त्रीय बौद्ध धर्मको ग्रन्थहरूको पेछ्या शैलीमा एउटै पेछ्या भित्र तामाङका ह्वुईहरूको बाब्सा, ठुङसा र फोलाका बारेमा, संसारमा विभिन्न वस्तुहरूको परस्परको एक अर्कामा हुने ब्रेल्बा(सम्बन्ध)का बारेमा र विभिन्न ज्ञान विज्ञान र युग पुरूषहरूको आख्यान ल्होग्र्यु (आख्यान)हरू बताएका हुन्छन्।

### १२.१.२ रीमठीम( संस्कार संस्कृति):

तामाङ आदिवासी समुदायको विभिन्न संस्कृति, संस्कारहरू ताम्बाको भाखामा विवाह, टाप्च्ये(छेवार) तथा अन्य **दोअीला**, कीराल्बा कीर्बा क्लाङबा जस्ता अवसरहरूमा गाउने ऐतिहासिक गीतहरू नै **ह्वामा** या रीमठीमका व्हाअी हुन्। यस्ता रीमठीमका व्हाअीहरू पनि स-साना हस्त लिखित ग्रन्थहरूका रूपमा लेखिएको पाइन्थ्यो। जस मध्ये सन १९५९ मा दार्जीलीङबाट सन्तवीर पाख्रीनको **'सेबु सेमु'** देवनागरी लिपिमा प्रकाशनमा आएको थियो। कृष्णमान लामाको **'मार बुंबा, म्हुअी बुंबा**, **ब्रेल्बाला व्हाअी' वि.स.२०३६** सालमा प्रकाशन भएको थियो। सिक्किमका जिडि लामा द्वारा "तामाङ च्यङनीला ठीम थेन ताम छ्योअी" सन १९८३ आदि प्रकासनमा आएका थिए। यी ग्रन्थहरूको मूल स्रोत पुरानो जीक्तेन ताम छ्योअी, ताम्बा काअीतेन, आदि नै हो।

### १२.२ तामाङ युल्बाला ग्योतकाअी (लोक साहित्य):

तामाङ भाषामा तामाङ बस्तीहरूमा प्रशस्त लोक साहित्यका भण्डार पाइन्छ। तर नेपालमा राज्यले एक जाति र एक भाषा र एक भेषको नीति अवलम्बन गरेको कारण खस भाषा बाहेकका भाषाहरूले आफ्नो भाषालाई व्यवहारमा प्रयोग गर्न सम्म पाएन। जसले गर्दा लोक साहित्यको अपार भण्डार भए तापनि त्यसले फक्रने अवसर पाएका छैन।

एउटा गाउँको सानो बस्तीमा सयौं कथा, आख्यान, वीरताका गाथाहरू पाईन्छन् यसलाई नुवाकोटका बीगेन्द्र वाअीबाले संकलन गरेका 'याबेङ स्योङ' कथा संग्रहले पुष्टि गरि दिएका छन्।

### १२.१.२ रीमठीम( संस्कार संस्कृति):

तामाङ आदिवासी समुदायको विभिन्न संस्कृति, संस्कारहरू ताम्बाको भाखामा विवाह, टाप्च्ये(छेवार) तथा अन्य **दोअीला**, कीराल्बा कीर्बा क्लाङबा जस्ता अवसरहरूमा गाउने ऐतिहासिक गीतहरू नै **ह्वामा** या रीमठीमका व्हाअी हुन्। यस्ता रीमठीमका व्हाअीहरू पनि स-साना हस्त लिखित ग्रन्थहरूका रूपमा लेखिएको पाइन्थ्यो। जस मध्ये सन १९५९ मा दार्जीलीङबाट सन्तवीर पाख्रीनको **'सेबु सेमु'** देवनागरी लिपिमा प्रकाशनमा आएको थियो। कृष्णमान लामाको **'मार बुंबा, म्हुअी बुंबा**, **ब्रेल्बाला व्हाअी' वि.स.२०३६** सालमा प्रकाशन भएको थियो। सिक्किमका जिडि लामा द्वारा "तामाङ च्यङनीला ठीम थेन ताम छ्योअी" सन १९८३ आदि प्रकासनमा आएका थिए। यी ग्रन्थहरूको मूल स्रोत पुरानो जीक्तेन ताम छ्योअी, ताम्बा काअीतेन, आदि नै हो।

### १२.२ तामाङ युल्बाला ग्योतकाअी (लोक साहित्य):

तामाङ भाषामा तामाङ बस्तीहरूमा प्रशस्त लोक साहित्यका भण्डार पाइन्छ। तर नेपालमा राज्यले एक जाति र एक भाषा र एक भेषको नीति अवलम्बन गरेको कारण खस भाषा बाहेकका भाषाहरूले आफ्नो भाषालाई व्यवहारमा प्रयोग गर्न सम्म पाएन। जसले गर्दा लोक साहित्यको अपार भण्डार भए तापनि त्यसले फक्रने अवसर पाएका छैन।

एउटा गाउँको सानो बस्तीमा सयौं कथा, आख्यान, वीरताका गाथाहरू पाईन्छन् यसलाई नुवाकोटका बीगेन्द्र वाअीबाले संकलन गरेका 'याबेङ स्योङ' कथा संग्रहले पुष्टि गरि दिएका छन्।

## १२.३ तामाङ गित:

तामाङ गितहरूको बारेमा संस्कृति तथा गीत संगित अध्यायमा चर्चा गरिएको छ। तामा पनि तामाङ भाषामा गीतलाई **व्हाओी** अथवा **लु** भनिन्छ। तामाङ भाषामा धैरै प्रकारका व्हाओी तथा लुहरू पाइन्छ।

खास गरी संयोगान्त हुने, बिछोड हुने, नरमाईलो हुने बेलामा गाउँने गीतलाई **छेर्लु** भनिन्छ। भने रमाइलो, खुसी भएको बेला, मित्रहरू तथा आफ्ना प्रियजन सँग भेट हुँदा गाउने गीतलाई **चोम्लु** भनिन्छ। यस्ता गीत सन १९७७ तीर थ्वीन्डेल नामको सिताराम तामाङ र साथीहरूको सम्पादकत्वमा प्रकाशित पत्रिका समेत प्रकाशन भएका छन्।

## १२.४ तामाङ साहित्यका उत्थान तथा सगठन:

तामाङ ग्योतकाओीको उत्थान तथा संगठनको मुख्य श्रेय ताम्बा, लाब्ताबा, बोमसाङ खेनहरू नै हुन्। तामाङ समाजका यी अगुवा नेतृत्व दायी व्यक्तित्वहरूको कारण तामाङ भाषाको लिखित भन्दा बढि श्रुति परम्परा तथा मौखिक परम्परा अज सम्म तामाङ भाषाको आख्यानहरूलाई संरक्षण गर्दै ल्याएकाले नै आज सम्म तामाङ भाषामा आफ्नो पुर्खौली थलोहरूको पहिचान सम्भव भएको हो।

त्यस कारण बाह्र तामाङले बसाली आएको थितीहरूले गर्दा नै तामाङ वंशावलीहरू आज सम्म यो रूपमा बाँच्न सफल भएको हो। त्यस कारण पनि तामाङ समाजका तामाङ ग्योतकाओीका प्रवर्तकका रूपमा ताम्बा, गान्बा तथा ल्हाप्ताबा, बोन्बो महेमेहरूलाई पुर्खाको पाला देखि चलि मानी ल्याएको यो परम्पराको रक्षा हुनुमा मुख्य श्रेय जान्छ।



# तामाङ जातिको चिनारी

## १३. छोर्बा सोर्बा ग्लाखोररी तामाङ ग्योत

## 'सूचना, सन्चार तथा सरकारी निकायमा तामाङ भाषा'

हाल तामाङ भाषाको प्रयोग केही सरकारी तथा गैरसरकारी निकायहरूमा सीमित क्षेत्रमा मात्र भएपनि प्रसारण, छापालगायत विद्युतीय सन्चार माध्यममा पनि प्रयोग भइराखेको छ। राज्यबाट मातृभाषामा शिक्षा सूचनाको हक जस्तो आधारभूत मानवअधिकारका हकहरूसम्म पनि प्राप्त छैन।

आफ्नै बलबुताले अन्य नेपाली आदिवासी जनजाति मातृभाषाहरूको तुलनामा तामाङ भाषाको प्रयोग विस्तार र विकास सकारात्मक नै देखिन्छ। नेपालमा बोलिने मातृभाषाहरूमध्ये खस नेपाली भाषा (सरकारी कामकाजी) र नेवारी (नेपाल भाषा) पछि सर्वाधिक प्रयोग हुने तामाङ भाषा नै हो। तामाङ भाषा विद्युतीय सन्चार माध्यममा सर्वाधिक ४० भन्दा बढि एफएम रेडियो प्रसारण केन्द्रहरूबाट दैनिक, अर्धसाप्ताहिक तथा साप्ताहिक मनोरन्जनात्मक कार्यक्रमहरूलगायत समाचार प्रसारण भइरहेको छ ।

नेपालमा मातृभाषाको गीत सङ्गीतको क्षेत्रमा पनि सर्वाधिक बिक्ने गीति क्यासेट तामाङ भाषाको नै रहेको कुरा बिक्रेता तथा वितरकहरूले बताएका छन्। त्यसैगरी नेपालको छापा माध्यममा पत्रपत्रिकामा पनि नेपाल भाषापछि तामाङ भाषा नै अग्रस्थानमा छ। नेपालका मातृभाषाहरूमध्ये सरकारी कामकाजीभाषा पछि तामाङ भाषा नै सर्वाधिक विद्युतीय सन्चार माध्यममा प्रयोग हुने भाषा हो। यसले नै सिद्ध गर्दछ कि तामाङ भाषाको प्रयोग तामाङ दैनिक जीवनमा अपरिहार्य छ। हाल तामाङ भाषा अनौपचारिक शिक्षा तथा प्राथमिक शिक्षादेखि छापा तथा कम्प्युटरबाट इन्टरनेट आदिमा पनि प्रयोग भइसकेको छ। नेपालमा मातृभाषाको गीत (सङ्गीतमा सर्वाधिक बिक्ने गीति क्यासेट तामाङ भाषाको भएको कुरा

झारहरू गोड्दा, वनमा दाउरा टिप्न जाँदा र दाउरा काट्दा बखतको जीव र मानवका सम्बन्ध, पर्यावरणको सम्बन्ध बडो सचेतता/सजगकताका मौलिक लोकगीत *लीङमा* पाइन्छ।

तामाङ लोक साहित्यको क्षेत्रमा एकाध ग्रन्थ सन्तवीर पाखिनको *ताम्बा काओथेन क्वाओ रीमठीम* ई. १९५६, उनैको *सेबु सेमु ह्रामा* गीत ई. १९५७, शंखबुद्ध लामा तथा साथीहरूको *कार्पा ल्होर्गयुओ छ्योओ ताम,* कृष्ण लामाको *म्हार बुम्बा, म्हुओ बुंबा, ब्रेल्वाला क्वाओ* ई. १९८९, अजितमान तामाङका कथा सङ्ग्रह *बारु युल्सा* ई. १९९२, बिगेन्द्र बाओबाको कथा सङ्ग्रह *याबेङ स्योङ* ई. १९९८ मा प्रकाशन भएका केही तामाङ लोकसाहित्यका सङ्ग्रहहरू हुन्। यसै गरी परशुराम तामाङ *ह्याङला ताम्बा काओतेन* सन २००० मा, अजितमान तामाङको *तामाङ जातिका मौखिक इतिहासका अवशेषहरू,* ई. २००२, कर्णेल युनिभरसिटिका क्याथिन एस मार्चको इफ इच *कमस हाफ वे, मिटिङ तामाङ वमेन इन नेपाल,* ई. २००२, मोक्तान बीबी तामाङका *मोक्तान ह्रुओकी फोला छ्योओ* ई. २००६ आदि केही उल्लेख्य तामाङ लोकसाहित्यका लोककथा, लोकगीत, लोक आख्यान, लोककाव्य, लोक संस्कृति, लोक इतिहास विधाका समेटिएका हाल प्रकाशनमा आएको तामाङ लोक साहित्य सङ्ग्रह भएका कृतिहरू हुन्।

***तामाङ युलबाला नाम्दार* 'लोक कथा'**

तामाङ लोक जीवनमा सयौं हजारौंको सङ्ख्यामा लोक कथाहरू यत्रतत्र छरिएर रहेको पाइन्छ। तापनि तामाङ लोक कथाका क्षेत्रमा पनि खास काम हुन सकेको छैन। तामाङ समाजमा उपदेशमूलक, उपाय बुद्धि बारेका, ऐतिहासिक, सांस्कृतिक, धार्मिक, नाता सम्बन्धका, उत्पत्तिका बारेमा, शिल्पकला बारेका, वीरता बारेका, लोक कल्याण बारेका लोककथाहरू पाइन्छ। अजितमान तामाङको कथा सङ्ग्रह *बारु युल्साको न्हु थेन बाओ कोला* उपाय बुद्धिको लोक कथाका उदाहरणहरू हुन् भने तामाङ भाषामा सृजनात्मक साहित्यको विकास हुँदै गरेकाले लघुदन्ते कथाहरूको सङ्ग्रहहरू प्रकाशन आएको छैन। तर विभिन्न तामाङ पत्रिकाहरूमा भने फाट्फुट्ट कथाहरू प्रकाशन हुन थलेका छन्। अजितमान तामाङको कथा सङ्ग्रह *बारु युल्सा* मा *बारु युल्सा* शीर्षकमा एउटा दन्ते कथा परेको छ। बेलबारीका रमेशकुमार लामाको आफ्नै सम्पादनमा प्रकाशित सैलुङ मासिकमा उनको ६ वटा दन्त्यकथा प्रकाशित भएका छन् भने पछिल्लो चरणमा तामाङ डाजाङले आफ्नो प्रकाशन *डाजाङ* मा कथाहरू पनि प्रकाशन गर्दै आएको

छ। तामाङ भाषामा विभिन्न विधाका कथाहरू पाइएका छन्। वीरता
कथा, ऐतिहासिक कथा, अर्ती उपदेशको कथा, उत्पति कथा, धार्मिकक
भूतप्रेतको कथा, बाल कथामा हालै विश्वनाथ योन्जनको *झला युल* शीर्षक
बाल कथा सङ्ग्रह र रामकुमार जीम्बाको *म्हाङ* कथा सङ्ग्रह पनि प्रकाशन
आएका छन्। तापनि तामाङ भाषामा कथाहरू प्रकाशनमा आएको
नगन्य सङ्ख्यामा मात्र रहेका छन्।

***तामाङ ताम्पे* 'तामाङ उखान टुक्का'**

तामाङ भाषामा उखान टुक्कालाई *तामाङ ताम्पे* भनिन्छ। तामाङ भाषा
प्रशस्त उखान टुक्काहरू पाइन्छन्। तामाङ भाषामा उखान टुक्काह
पाईए पनि पर्याप्त मात्रामा सङ्कलन तथा प्रकाशन भने भएको छैन
तामाङ उखान टुक्कामा इतिहास, अर्ती उपदेश, साहसका विषयवस्तुह
समेटिएको पाइएको छ। हालसम्म अजितमान तामाङको तामाङ *ताम्पे*
१९९५, यसबाहेक अरू तामाङ उखान टुक्का सङ्ग्रह प्रकाशनमा आए
छैन। तामाङ भाषामा उत्कृष्ट तामाङ उखानहरू पनि पाइन्छ। उदाहरण
लागि ककनी नुवाकोटमा पाइएको एउटा तामाङ *ताम्पेमा काकानीला*
*रुम्बा नाकी डीसे प्लाक तुम्बा* भनेर तामाङ राज नेताका सन्तानल
व्यङ्ग्य गरिएको पाइन्छ।

***तामाङ जोम क्लाङ/ओम क्लाङ* 'गाउँ खाने कथा'**

तामाङ भाषामा गाउँखाने कथालाई *जोमक्लाङ/ओमक्लाङ/कोर्चाक्ल*
भनिन्छ। तामाङ समुदायमा खेती बाली रोपाइँ तथा बाली भित्र्या
समयमा कामसँगै गाउँ खाने कथा साथीसँगीहरूसँग ठट्टा रमाइलो
*ङ्योत्पा दोबा* सोध्ने खेलको रुपमा खेलिन्छ। टुक्का मिलाएर सोध्नुको स
तामाङ समुदायमा गीतबाट पनि *जोमक्लाङ* खेल्ने गरिन्छ। ताम
*जोमक्लाङ*को एउटा सङ्ग्रह अजितमान तामाङको *जोमक्लाङ/ ओमक्ला*
*कोर्चा क्लाङ* ई. १९९५ मा प्रकाशन भएको छ भने गीति *जोमक्ल*
सन्तबीर पाखिनको *ताम्बाकाओतेन क्वाओ रीमठीम* पुस्तकको पृष्ठ ३७-
मा प्रश्न उत्तर गीतको रुपमा प्रकाशित भएको छ।

***तामाङ चेमा* 'नाटक'**

तामाङ तामाङ भाषामा नाटकलाई *चेमा* भनिन्छ। तामाङबस्तीहरु
विभिन्न सन्दर्भहरूमा सडक नाटक जस्तो देखाउने चलन छ। रस
नुवाकोट, धादिङ भेगमा ल्होछारको समय वरिपरि *छेस्युग* उत्सव मनाइन
यो उत्सवमा प्रत्येक दिन जस्तो एउटा या दुई नाटक उपदेश गर्ने गरिन
यस्तै काभ्रेको तिमाल भेगमा पनि *दोओला* पूजा सन्चालन गरेको बेल

# तामाङ जातिको चिनारी

## १४. तामाङ भाषामा शिक्षा

हालको आधुनिक शैक्षिक पद्धति आउनु अगाडिदेखि नै तामाङ भाषा र धार्मिक शास्त्रीय *अुछेन* लिपिमा *गुम्बामा गोन्पा लोप्डा/लोप्खाङ*बाट परम्परागत पद्धतिवाट बौद्ध शिक्षामा साक्षारता हासिल गर्न, दीक्षित हुने चलन थियो र यो प्रचलन अद्यापि पाइन्छ र उनीहरूले नै शैक्षिक मापदण्डको स्तर निर्धारण गरेर दीक्षित थोब-यीक 'प्रमाण-पत्र' दिइन्छ। हिजोआज पनि पहिले-पहिलेका गुरुहरूबाट दीक्षित *थोब-यीक* पाएका व्यक्तित्त्वहरू प्रशस्त भेटिन्छन्।

अहिले तामाङ भाषामा प्राथमिकस्तरका पाठ्यपुस्तकहरूको बारेमा व्यापक छलफलहरू सबै जिल्लामा स्वतस्फूर्त रुपले बढिरहेको छ। नेपालमा आधारभूत शिक्षा भनेर कक्षा-८ सम्मलाई **रापाप्रामा** उल्लेख भइसकेको छ। हालसम्म तामाङ भाषाको कक्षा १-५ सम्मको एउटा विषयगत पाठ्यपुस्तक निर्माण भइसकेको छ। यसपाली *तामयीग* तामाङ लिपिमा कक्षा १ को पाठ्यपुस्तक पाठ्यक्रम विकास केन्द्रले नै प्रकाशन गर्दैछ।

### १४.१ *गुम्बा लोप्डा/लोप्खाङ* 'गोन्पा शिक्षा'

*गोन्पामा* पहिलेदेखि परम्परागत रुपमा शास्त्रीय बौद्धधर्ममा भाषा तथा लिपिमा अक्षर जान्ने गरी पढ्न लेख्न सिकाउने कार्य हुने भएकाले नेपाल सरकार शिक्षा मन्त्रालयले विगत केही वर्षदेखि *गोन्पामा* पढाइ हुने परम्परागत शिक्षालाई पनि *गोन्पा* शिक्षा शिक्षाको रुपमा मान्यता दिएको छ।

### १४.२ औपचारिक आधुनिक शिक्षा

नेपाल सरकारले हाल सालै मात्र रापाप्रा तयार गरेकाले भावी दिनहरूमा नेपालमा तामाङ लगायत मातृभाषाहरूमा विद्यालय, विश्वविद्यालय लोपखाङहरूमा नयाँ आधुनिक औपचारिक शिक्षा प्राप्त गर्न अवसर चाँडै

## सिक्किम विधानसभामा मातृभाषी अनुवादको व्यवस्था

राज्यको विधानसभामा सांसद लगयात विभिन्न मातृभाषी सिक्किमेली जनतालाई राज्यको कार्यविधिको जानकारी दिइ पारदर्शी गर्ने उदेश्येले प्रत्येक मातृभाषाका अनुवादक दुइजनाको विधानसभामा सरकारले स्थायी कर्मचारीको व्यवस्था गरेको छ।

## स्कुलमा मातृभाषाको शिक्षकको व्यवस्थाः-

सिक्किममा राज्य सरकारले नै मातृभाषाको शिक्षकहरुको स्थायी व्यवस्था गरिदिएको छ। सरकारी स्कूलमा हाल प्राथमिक तहमा तामाङभाषाको शिक्षक नियुक्ति भइ कक्षा संन्चालन भइरहेको छ।

सिक्किममा उपरोक्त तामाङ मातृभाषा सम्बन्धि सम्पूर्ण(मातृभाषाका अनुवादकहरुको छनोट, लिपिको खोजी तथा चयन, शिक्षकहरुको चयन आदि) कार्यका लागि तामाङ समुदायका राज्यबाट मान्यता प्राप्त 'सिक्किम तामाङ बौद्ध संघ'लाई पूर्णरुपमा संलग्न गराई कार्य सम्पादन गरिएको देखिन्छ।

## लेखकको संक्षित परिचय



अजितमान तामाङ

अनुसन्धाता तथा लेखक अजितमान तामाङको जन्म सङ्घीय गणतन्त्र नेपालको तामाङ जातिको बाहुल्य क्षेत्र ताम्सालीङभित्र पर्ने नुवाकोट जिल्लाको बोमताङ (बुङताङ) तामाङ बस्तीमा तत्वीय सम्बत् मे-मो लुग ल्हो, म्हेनीङ-महिनामा भएको हो । तामाङले त्रिविबाट इतिहास, अर्थशास्त्रमा स्नातक, बौद्ध अध्ययनमा पोष्ट ग्राजुयट तथा स्नातकोत्तर, भाषा विज्ञान तथा मानवशास्त्रमा स्नातकोत्तरसम्म शिक्षा हासिल गर्नुभएको छ । तामाङको पहरी भाषा, डुकुछापको दनुवार जातिको भाषा, लोकसाहित्य, लोकवार्ता, लोक इतिहास तथा प्रदर्शनकारी लोककलाका साथै तामाङ जातिको इतिहास, भाषा, तामयीग तामाङ मौलिक लिपिको विकास, तामाङ भेषभुषा, तत्वीय सम्वत्मा आधारित सांस्कृतिक पर्व ल्होछार जस्ता अनेकन तामाङ सांस्कृतिक तथा प्रदर्शनकारी लोककला तथा लोकवार्ता आदिसँग सम्बन्धित डेढ दर्जन पुस्तकहरू प्रकाशित भइसकेका छन् । तामाङ जातिको विविध पक्षहरूसँग सम्बन्धित नयाँ-नयाँ दृष्टिकोण र महत्वपूर्ण सूचना दिने दर्जनौं लेख रचनाहरू नेपाल तथा भारतका पत्रपत्रिकाहरूमा प्रकाशित भएका छन । नेपाल सरकारको नेपाल आदिवासी जनजाति

# थुजेछे । धन्यवाद ।।

### नेपाल तामाङ घेदुङको चिनारी

१. घेदुङको स्थापना २०१३ सालमा भएको हो । सामाजिक सामुदायिक संस्थाहरूमा सबभन्दा पुरानो मानिन्छ ।
२. नेपाल आदिवासी जनजाति महासङ्घको ८ संस्थापक संस्थाहरूमध्ये एक हो र महासङ्घको सङ्घीय परिषद्को सदस्य संस्था हो ।
३. नेपाल सरकारले बनाएको आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानको समेत सन्चालक परिषदको सदस्य संस्था हो ।
४. एक आधिकारिक संस्थाको हैसियतले तामाङ जनजाति हो भन्ने सिफारिस गर्ने अधिकार घेदुङलाई मात्र रहेको छ ।
५ नेपाल तामाङ घेदुङको २०४६।४७ मा भएको दोस्रो राष्ट्रिय अधिवेशनपछि प्रत्येक चार चार वर्षमा राष्ट्रिय महाधिवेशन नियमित रुपमा हुँदै आएको छ । यही २०६८ साल बैशाखमा यसको सातौ राष्ट्रिय महाधिवेशन हेटौडामा सम्पन्न भयो ।
६. यो तामाङ समाजको एक लाभ निरपेक्ष, साझा र राष्ट्रिय स्तरको समुदायमा आधारित सामाजिक संगठन (Peoples Based Organization) हो । यसलाई छोटकरीमा अंग्रेजीमा IPOs अर्थात् आदिवासी जनताको संगठनको रूपमा मानिन्छ ।
७. नेपाल तामाङ घेदुङको अगुवाइमा नै पहिलो अन्तर्राष्ट्रिय तामाङ सम्मेलन काठमाडौमा २०५९ सालमा सम्पन्न भयो ।
८. अन्तर्राष्ट्रिय तामाङ सम्मेलनले विश्वभरि छरिएर रहेका तामाङहरूको अन्तर्राष्ट्रिय सन्जाल अन्तर्राष्ट्रिय तामाङ परिषद्को निर्माण पनि गरेको छ ।
९. अहिले तामाङ समाजले ग्रहण गरेका र कार्यन्वयन भइरहेका तामाङ भेषभुषा, तामयिग लिपि, संस्कार संस्कृति एवं सोनाम ल्होछार परम्परा जस्ता यावत कुराहरू नेपाल तामाङ घेदुङदेखि अन्तर्राष्ट्रिय तामाङ सम्मेलनद्वारा